# गोरक्ष निखिल वाणी

आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिक

श्रावण, २०७०

## खुदी आश्रम विशेष

॥ ॐ नमो गुरु मछिन्द्र शब्द साँचा पिण्ड काचा मेरा भक्ति गुरुका शक्ति नवनाथै जगाऊँ चौरासीनाथै जगाऊँ फुरो मंत्र ईश्वरो गुरु गोरख वाचा ॥

# आश्रम गतिविधि

महाकाली एवं अप्सरा साधनाशिविरमा सदगुरुदेवहरूको पूजन गर्नुहुँदै पूज्य अरविन्द गुरुदेव (१), आरतीको क्रम (२), त्रिभुवन अन्तर्राष्ट्रिय विमान स्थलमा पूज्य अरविन्द गुरुदेवको स्वागत हुँदै (३), पूज्य अरविन्द गुरुदेवलाई नेपाली टोपी लगाउनुहुँदै सावपन्थी रामजी अर्यालज्यू (४) पूज्य अरविन्द गुरुदेव साधना शिविरमा (५) शिविरको क्षण

# आश्रम गतिविधि


महाकाली एवं अप्सरा साधना हुँदै (१), नृत्यरत साधकसाधिकाहरु (२), सिद्धाश्रम शक्ति केन्द्र र अन्तर्राष्ट्रिय सिद्धाश्रम साधक परिवारको संयुक्त प्रस्तुति 'करदो कृपा गुरुवर'को लोकार्पणको क्षण (३), पूज्य अरविन्द गुरुदेवको चरणमा माल्यार्पणको क्रम (४),पूज्य अरविन्द गुरुदेवका साथ साप र सामाज्यू (५), सुमधुर सांगीतिक प्रस्तुति (६), नृत्यरत साधिकाहरु (७, ८)

● वर्ष १४ ● अङ्क १२ ○ श्रावण २०७० ○ पूर्णाङ्क १६८

# जानकारी

*सिद्धाश्रम शक्ति केन्द्र नेपालको प्रचलित कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, काठमाडौँमा रहेको छ । परमपूज्य सद्‌गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो । आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ । यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ । यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत् सोझै निर्देशित छन् । यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राणप्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ । त्यसैले एक स्वतन्त्र र आफैँमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ, जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्‌गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन् । त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो। प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ । विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिकनो सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ । यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ । साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ ।*

*सिद्धाश्रम शक्ति केन्द्रबाट प्रकाशित 'गोरक्ष निखिल वाणी' नेपालकै पहिलो आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिक पत्रिका हो । सद्‌गुरुदेवहरूको आशीर्वादस्वरूप यस पत्रिका २०५६ साल भाद्र महिनादेखि अनवरत रूपमा प्रकाशित भइरहेको छ । काठमाडौँ जिल्ला प्रशासन कार्यालयमा दर्ता भएको यस पत्रिकाको दर्ता नं. ७०/०५६ हो । यो पत्रिका धर्मको नाममा हुने गरेको शोषण, आडम्बर एवं पाखण्डविरुद्ध आवाज उठाउँदै वास्तविक तथ्यलाई जनसमक्ष उजागर गरी आध्यात्मिक जागरणको वातावरण बनाउने कार्यमा सरिक हुँदै आएको छ । प्रकाशनको शुभारम्भदेखि नै अलगै पहिचान एवं अस्तित्व बनाउन सफल यस पत्रिकाले मंत्र, तंत्र, योग, आयुर्वेद, सम्मोहन, ध्यान, वेद, पुराण, उपनिषद् आदिजस्ता ऋषिमुनिहरूद्वारा प्रतिपादित तथ्यहरूको व्यवहारिक एवं वैज्ञानिक पक्षहरूलाई प्रस्तुत गर्दै आइरहेको छ । पत्रिका स्वदेश एवं विदेशमा समेत आफ्ना लाखौँ पाठक एवं प्रशंसकहरूमाझ लोकप्रिय हुँदै गइरहेको छ । वेबसाइटमार्फत् पढ्न पाइने व्यवस्थाले विश्वभर छरिएका लाखौँ नेपालीहरूमाझ पनि प्रिय छ ।*

*पत्रिकामा प्रकाशित लेख, रचना, विज्ञापन, चित्रादिमा सम्पादक वा प्रकाशकको सहमति हुनु आवश्यक नरहेको पनि जानकारी गराइन्छ ।*

## यसभित्र



पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं
**सिद्धाश्रम शक्ति केन्द्रद्वारा प्रकाशित**
मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

पत्रिकाको कार्यालय
बसुन्धरा, काठमाडौँ, पो.ब.नं. १०५११,
२७६०
फोन: ०१-४३८०१५४,
URL: gnv.org.np, Email: info@gnv.org.np

पत्रिकासम्बन्धी कुनै पनि जानकारीका लागि पत्रिका व्यवस्थापक मधुबहादुर कार्की, मो. ९८४१३१५८६५ सित सम्पर्क राख्न सक्नुहुनेछ ।

प्रकाशकको ठेगाना
**सिद्धाश्रम शक्ति केन्द्र**
बसुन्धरा, काठमाडौँ
पो.ब.नं.१०५११, २७६०,
फोन: ४३८०१५४, २१००१५३
ssk.org.np, info@ssk.org.np

मुद्रण
भेराइटी प्रिन्टर्स प्रा.लि.
कुलेश्वर, काठमाडौँ ।

# आफ्नै कुरा

श्रावण महिनालाई सिद्धाश्रम शक्ति केन्द्रले श्री शिवगोरक्ष महोत्सवको रूपमा मनाउँदै आइरहेको छ । श्रावण महिनालाई शिवको महिना भएको र गुरु गोरक्षनाथ नै शिव हुनु भएकोले श्रावण महिना वास्तवमा गुरु गोरक्षनाथको महिना हो । श्री शिवगोरक्ष आफैँमा भगवान् शिवको मूलस्वरूप हुनुहुन्छ । श्री शिवगोरक्षको महिमा, गरिमा, उच्चता, दिव्यता आफैँमा अवर्णनीय छ । चारै युग गुरु गोरक्षनाथप्रति ऋणी छ । योगी, महायोगी, ऋषिमुनि, देवीदेवता, अवतारी पुरुषहरू, मानव आदि सबैका परम आराध्यदेवको रूपमा गुरु गोरक्षनाथलाई सबैले आदर, सम्मान गर्ने गरेको पाइन्छ । यसरी सम्पूर्णका आराध्यदेव, योगीहरूका पनि महायोगी, गुरुहरूका पनि महागुरु, नाथहरूका पनि महानाथ गुरु गोरक्षनाथ अनन्तकोटि ब्रह्माण्डका मालिक हुनुहुन्छ । उहाँलाई श्रद्धा, भक्ति गरी खुशी बनाउने एक दिव्य महिनाको रूपमा श्रावण महिनालाई लिने गरिन्छ । यस्ता अद्वितीय महानाथलाई गुरुरूपमा मानेर अगाडि बढेको सिद्धाश्रम शक्ति केन्द्रले श्रावण महिनालाई श्री शिवगोरक्ष महोत्सवको रूपमा आफ्नो स्थापनाकालदेखि नै मनाउँदै आइरहेको छ । यस वर्ष पनि हवन, भजनकीर्तन, साधना आदि गरेर मनाउने तयारीमा जुटिरहेको छ । त्यसैले श्रावण महिनाभरि प्रत्येक सोमबार हुने गोरक्ष शक्तिपीठका हवनहरूमा यहाँहरूलाई पनि हार्दिक आमन्त्रण गर्दछौँ ।

यसपालिको अंकलाई खुदी आश्रम विशेषको रूपमा निकालेका छौँ । लेखनाथ नगरपालिका वडा नं १२ का साधकसाधिकाहरूको प्रयासले गुरुहरूको महान योजनामा एउटा ईँटा थप्ने कार्य भएको छ । साधकसाधिकाहरूको पहलमा आश्रम भवन निर्माण भएको छ । खुदीको यस क्षेत्रमा आश्रम निर्माणले यस क्षेत्रका भक्तहरूका लागि आस्थाको केन्द्र बनेको छ । यस आश्रम भवन निर्माणको लागि साधकसाधिकाहरूको मिहिनत, परिश्रमले यस भवन निर्माण भएको छ । यस आश्रम भवन निर्माण क्रममा भए गरेका गतिविधिहरू एवं निर्माण समिति आदिलाई समेट्ने कोशिश गरेका छौँ । हुन त खुदी आश्रम भवनको उद्घाटन हुन लागेको यस पुनीत अवसरमा आश्रमका विविध कुराहरू समेटेर स्मारिका निकाल्ने प्रयासलाई आफ्नै मुखपत्रको रूपमा प्रकाशित भइरहेको गोरक्ष निखिल वाणीलाई नै खुदी आश्रमको स्मारिकाको रूपमा 'खुदी आश्रम विशेष'को रूपमा निकालेका छौँ । यस अंकमा धेरै कुराहरू, कैयौँ विषयहरू समय अभावको कारणले प्रकाशित गर्न सकिएन । तैपनि जे जति सामग्रीहरुलाई समेटेर एउटा संग्रहणीय अंकको रूपमा प्रकाशित गर्न सफल भयौँ, यो पनि गुरुकृपा र आशीर्वादको फलस्वरूप नै हो । यस पत्रिका प्रकाशनको कार्यमा खुदी आश्रमको तर्फबाट भएको सहयोगलाई हार्दिक धन्यवाद दिँदै पत्रिका युनिटमा खट्नुहुने सबैलाई धन्यवाद व्यक्त गर्दछौँ । यसैले यस अंकमा भए गरेका समस्त गल्ती, कमी-कमजोरीका लागि परमपूज्य सद्गुरुदेव, माताहरू र यहाँहरूसमक्ष पनि क्षमायाचना गर्दै सद्गुरुदेव एवं माताहरूको कृपा प्राप्त भई खुदी आश्रमको उन्नति प्रगति हुँदै जाओस् भन्ने प्रार्थना गर्दछौँ ।

अस्तु ।



**परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज**

**परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ**

मानव जीवनमा गुरुको सर्वथा उच्च स्थान मानिन्छ । गुरु प्राप्तिबिना मानव जीवन व्यर्थ छ । सम्पूर्ण शास्त्रको सम्यक् ज्ञान भए पनि, धन सम्पत्ति र रूप लावण्यले भरिपूर्ण भए पनि, समस्त प्रकारका सिद्धि, शक्ति र ऐश्वर्यले भरिपूर्ण भए पनि यदि गुरु प्राप्त भएको छैन भने मानिस अपूर्ण नै हुन्छ किनकि गुरुले नै संसार सागरबाट तारेर हामीलाई मोक्षको भागीदार बनाउनुहुन्छ, हामीलाई असीम आनन्दबाट तृप्त गरेर पूर्ण गरिदिनुहुन्छ । यसप्रकार पूर्णता, मुक्ति अनि अनगिन्ती सिद्धि र शक्ति प्रदान गर्नुहुने दुई सद्गुरुदेवहरूलाई सिद्धाश्रम शक्ति केन्द्रले धारण गरिरहेको छ । गुरुहरूको महिमा, गरिमा र परिचय कसले पो दिन सक्छ र ? तैपनि सामान्य जानकारीसम्मका लागि महान् गुरुहरूको संक्षिप्त परिचय दिएका छौँ–

*वन्दे नारायणं देवं सद्गुरुं निखिलेश्वरं ।*
*ज्ञानामृतरसेनैव पूतं येनाखिलं जगत् ॥*

यस विश्व ब्रह्माण्डलाई भौतिक एवं आध्यात्मिकरूपले सन्तुलित राख्न प्रकृतिद्वारा निर्मित अद्वितीय तपस्थली नै सिद्धाश्रम हो । मानवजीवनको अन्तिम ध्येय यस सिद्धाश्रमका प्राणाधार परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज हुनुहुन्छ । आफ्ना गुरु स्वामी सच्चिदानन्दज्यूको आदेश शिरोपर गरी 'धर्मसंस्थापनार्थाय...' को शंखघोष गर्दै उहाँ सन् १९३५ अप्रिल २१ तारीखमा भारतस्थित राजस्थान प्रान्तको जोधपुरमा अवतरित हुनुभयो । वेदाध्ययनबाट शिक्षा शुरु गर्नुभएका उहाँको विवाह बाह्र वर्षको उमेरमा भगवती देवीसँग भयो । आफ्नो जीवन परिवारको लागि मात्र नभएर सम्पूर्ण समाजको लागि हो भन्दै विवाहपश्चात् उहाँले थुप्रै वर्ष हिमालयका गुफा, विकट कन्दरा र जंगलहरूमा संन्यासजीवन बिताउनुभयो । त्यसबेला उहाँले विभिन्न स्वामी, संन्यासी, योगी, तान्त्रिक, मान्त्रिक, आयुर्वेदाचार्यहरूसँग भेटेर विभिन्न विधामा आफूलाई निष्णात् बनाउनुभएको थियो । संन्यासजीवनपश्चात् पुनः गृहस्थमा फर्केर आफूले प्राप्त गरेको आध्यात्मिक ज्ञानलाई समाजमा फैलाउने कार्य गर्नुभयो । यसको लागि सयौँ पुस्तकहरूको रचना गर्दै असंख्य शिविर सञ्चालन गरी साधना, प्रवचन र दीक्षाको माध्यमबाट शिष्य निर्माण प्रक्रियालाई जोड दिनुभयो । यसरी ज्योतिष, सामुद्रिक शास्त्रका सुविज्ञ ज्ञाता, तन्त्र-मन्त्रका अन्तिम नाम, आधुनिक धन्वन्तरि, सम्मोहन विज्ञानका मसीहा, कुण्डलिनी शक्तिका सहज व्याख्याकार, सूर्य विज्ञानका अपूर्व ज्ञानी, धुरन्धर रत्न चिकित्सक आदिका रूपमा उहाँ डा. नारायणदत्त श्रीमालीको नामबाट विश्वमा विख्यात् हुँदै महामहोपाध्याय, मन्त्र शिरोमणि, समाज शिरोमणि, जगद्गुरु आदिको संज्ञाले विभूषित हुनुभयो । आगामी गोरक्ष निखिल युग निर्माणको महायोजना आफ्ना शिष्यहरूको काँधमा सुम्पेर सन् १९९८ जुलाई ३ मा महाप्रयाण लिई उहाँ आफ्नो मूल स्थान सिद्धाश्रम फर्कनुभयो । हाल सद्गुरुदेवकै सूक्ष्म आदेश निर्देशनबमोजिम सिद्धाश्रम शक्ति केन्द्र यस महान् योजनामा कटिबद्ध छ ।

*अनन्त कोटि ब्रह्माण्ड गोरक्ष स चराचरम् ।*
*दर्शनम् मुक्ति लाभं च तस्मै श्री गोरक्ष नमः ॥*

श्री श्री महायोगी गुरु गोरखनाथ सम्पूर्ण गुरुहरूमा महागुरु, सम्पूर्ण योगीहरूमा महायोगी, सम्पूर्ण नाथहरूमा महानाथ हुनुहुन्छ । महायोगी श्री श्री गुरु गोरखनाथ भगवान् शिवका सबैभन्दा महत्त्वपूर्ण र प्रमुख अवतारको रूपमा पूजित हुनुहुन्छ । योगमार्गको प्रचारको लागि भगवान् शिवले नै गोरक्ष रूप धारण गर्नुभएको हो । यसैले उहाँलाई श्री शिव गोरक्षको रूपमा आदर-सम्मान गर्ने गरिन्छ । गो शब्दको अर्थभित्र समाहित गाई, पृथ्वी, इन्द्रिय, आदि सम्पूर्णको रक्षा गर्ने गोरक्ष नै हुनुहुन्छ । श्रीमद्भागवत, नारदपुराण, स्कन्दपुराण, ब्रह्माण्डपुराण, शिवपुराण, शाक्तप्रमोद, गोरक्षगीता आदिमा उहाँको बारेमा उल्लेख भएको छ । विश्वको इतिहासलाई हेर्दा उहाँको प्राकट्य सयौँ हजारौँ वर्षको अन्तरालमा विभिन्न स्थानमा भएको पाइन्छ । यसबारे विभिन्न विद्वान्हरूले थुप्रै अनुसन्धान गरेका छन् । आमाको कोखबाट नभई आवश्यकताअनुसार आफै प्रकट हुनुहुने महायोगी अजर-अमर कायायुक्त हुनुभएको कुरा स्पष्ट हुन्छ ।

नेपालको सन्दर्भमा हेर्दा गोरखा राज्यको नामाकरण उहाँको नामबाट भएको पाइन्छ भने उहाँकै आशीर्वादबाट यो राष्ट्र कहिल्यै पराधीन बन्नु नपरेको गौरवशाली इतिहास रहेको छ । उहाँको ऋण चुकाउन पनि हामीले उहाँको भक्ति गर्नै पर्दछ । नाथपंथका अग्रज महानाथ गुरु गोरखनाथ नेपालका राष्ट्रगुरु हुनुहुन्छ । नेपालमा विभिन्न ठाउँमा उहाँका मठ-मन्दिरहरू छन् जस्तै गोरखाको गोरख गुफा, पशुपतिको मृगस्थली पीठ, हनुमानढोकाको काष्ठमण्डप आदि । सिद्धाश्रम शक्ति केन्द्रको अनुसन्धानअनुसार गुरु गोरखनाथ सर्वप्रथम यस धरतीमा वैशाख शुक्ल पूर्णिमाको दिन गोरखाको गोरख गुफामा प्रकट हुनुभएको थियो । नेपालमा मात्र नभएर विश्वभर उहाँका सम्प्रदाय, मन्दिर एवं मठहरू स्थापित छन् । आगामी गोरक्ष निखिल युग निर्माणको लागि गोरक्ष शक्ति जगाउँदै नाथ परम्परालाई समाजमा स्थापित गर्न सिद्धाश्रम शक्ति केन्द्र गतिशील छ ।

# श्री शिवगोरक्षा महोत्सव

सर्वप्रथम त श्री श्री महायोगी गुरु गोरखनाथको जुन प्रतिबिम्ब हामीले प्राप्त गरेका छौं, उहाँ त्यही स्वरूपमा हुनुहुन्छ भनेर हामीले बुझेका छौं । स्थूल सत्ताबाट यसरी बुझ्नु स्वाभाविक हो । तर श्री शिवगोरक्षको महिमा, उहाँको शक्ति अपरम्पार छ, उहाँ अनन्तस्वरूप हुनुहुन्छ । यसर्थ उहाँ विराटस्वरूपमा हुनुहुन्छ जसको बारेमा स्थूल देहको माध्यमबाट व्याख्या गर्ने सकिँदैन । हामीले स्थूल जगत्बाट जे बुझ्यौं वा जे बुझिरहेका छौं, त्यो नै हाम्रो लागि यथेष्ट प्रतीत भयो । यसको मतलब यो होइन कि हामीले जे-जति बुझ्न पायौं, त्यति मात्रै सम्पूर्ण कुरा हो । यसबाहेक पनि अझै धेरै कुरा बुझ्न बाँकी छन् । यसलाई बुझेर साध्य छैन, स्थूलताको परिधिभित्र कैद गर्न नै सकिँदैन । सूक्ष्मतामा उहाँहरू अति विराटस्वरूपमा हुनुहुन्छ । त्यसैले उहाँको बारेमा थाहा पाउन, बुझ्नका लागि हामी स्वयं पनि सूक्ष्म हुनु आवश्यक हुन्छ । हाम्रो विचारको घेरालाई हामीले धेरै फराकिलो बनाउनु जरुरी हुन्छ । हामी स्वयं विराटस्वरूप बन्न थालेपछि, हाम्रो विचारधारा पनि विराटस्वरूपको बनेपछि मात्र हामीले आंकलन गर्न सक्छौं ।

धेरै अगाडिदेखि नै श्री शिवगोरक्षको प्रकट दिवसलाई कैयौं ऋषिमुनिहरू, साधुसन्तहरूले पनि मान्दै आइरहेका छन् । उहाँको त्यो वास्तविक प्रकटस्वरूपलाई ठम्याउन सक्नेहरूले त्यहीरूपबाट मान्दछन्, ठम्याउन नसक्नेहरूले त मान्ने प्रश्नै भएन ।

वैशाखी पूर्णिमामा गुरु गोरखनाथ गोरक्ष गुफामा प्रथमपटक प्रकट हुनुभएको भन्ने कुरालाई आधार मानेर सिद्धाश्रम शक्ति केन्द्र नेपालले 'गोरक्ष प्रकट दिवस'को रूपमा नै मनाउँदै आइरहेको छ । सूक्ष्म सत्ताको माध्यमबाट पातालोकमा विराजमान रहनुभएका श्री शिवगोरक्षस्वरूपको ऊर्जा क्रमिकरूपमा माथि-माथि हुँदै आउँछ र आफ्नो प्रकट थलो जहाँ छ, त्यहाँ वैशाखी पूर्णिमामा विकसित हुँदै आएर केन्द्रीकृत हुने गर्दछ । सौभाग्यशाली व्यक्तिहरू, भक्तहरूले त्यही बेलामा दर्शन पाउने रहेछन् । उहाँ प्रकट भएको समयमा अति पापिष्ट व्यक्ति पनि यदि उहाँको नजिक पुग्दछ भने समस्त पाप उहाँले नष्ट गरिदिनुहुन्छ र उसको कल्याण हुन्छ ।

यसै वास्तविकतालाई बुझेर सिद्धाश्रम शक्ति केन्द्र नेपालले विना स्वार्थ केवल आफ्ना गुरुलाई खुशी पार्न, गुरुको कृपादृष्टि पाउन, यो सारा संसारमा शान्ति होस्, आनन्द होस् भन्ने कामनाका साथ यस पावन पर्वलाई मनाउँदै आइरहेको छ । ऊर्जा विकासक्रमको सिद्धान्तअनुसार ऊर्जाहरू बिस्तारै ऊर्ध्वमुखी हुँदै जान्छन् । ती ऊर्जाहरू जति माथि गए पनि पृथ्वीसँग नै जोडिएर रहेका हुन्छन् । ती ऊर्जाहरू आएर बस्ने स्थान नै पृथ्वी हो । पृथ्वीको कुनै त्यस्तो तह छ जहाँ उहाँ अति विराटस्वरूपमा व्याप्त हुनुहुन्छ । उहाँ यस्तो करुणामयीस्वरूपको हुनुहुन्छ कि त्यतिबेला पृथ्वीतटमा यज्ञादि कर्महरू, पूजा, आराधनाहरू, स्तोत्र पाठहरूजस्ता विभिन्न किसिमका पुण्यहरू गर्न सक्यौं भने हामीबाट सिर्जित ऊर्जाहरू स्वत: नै उहाँसम्म पुग्दछन् । वाष्पीकरण पद्धति भनेजस्तै ती तरंगहरू बिस्तारै माथि गएर स्वत: नै उहाँमा लीन हुन थालेपछि उहाँले त्यस ऊर्जालाई करोडौं गुणा शक्तिशाली बनाएर फेरि आशीर्वादस्वरूप पृथ्वीतटमै फर्काइदिनुहुन्छ । यसरी उहाँको आशीर्वाद प्रत्यक्षरूपमा प्राप्त गर्ने माध्यम भएको हुनाले त्यस समयमा पूजा, आराधना, साधना, भक्ति, ध्यान गर्ने परम्परा सिद्धाश्रम शक्ति केन्द्रले सञ्चालन गरेको हो ।

वैशाखी पूर्णिमाबाट हिसाब गर्दै जाँदा सूक्ष्म सत्ताका वास्तविक तरंगहरू श्रावण महिनाको आसपासमा पर्दछन् । कहिलेकाहीं आषाढको अन्ततिरबाट शुरु हुने गर्दछन् भने कहिलेकाहीं श्रावणको पहिलो हप्ताबाट पनि शुरु भएर मसान्ततिर टुङ्गिने रहेछन् । त्यसैलाई आधार मानेर ज्योतिषमा मुहूर्त निकालिन्छ । ऊर्जा माथि-माथि जाने क्रममा सम्पर्क टाढा हुने हुनाले पूजा, पाठ, यज्ञादि कर्महरूको गणना भए पनि आशीर्वाद भने पाउन सकिँदैन । त्यसैकारण ज्योतिषीय पद्धतिमा 'यो बेला योग छैन' भन्ने चलन छ ।

यस्तो किसिमको अनुसन्धानबाट प्राप्त भएका कुरालाई समाजले विश्वास गरुन् वा नगरुन्, संस्थाले इमान्दारीपूर्वक तिनलाई वास्तविक मुहूर्तअनुसार कार्यान्वयन गर्ने गरेको छ । ती कार्यक्रमहरू स्वयं परमपूज्य सद्गुरुदेवबाट स्वीकृति लिएर मात्रै तय हुन्छन् । उहाँहरूको आदेश नभइकन कार्यक्रम गरेर त वास्तविक फाइदा लिने सकिँदैन । विशेष गरी वैशाखी पूर्णिमादेखि श्रावण मसान्तसम्मको समय अमृत समय भएकोले उहाँको ब्रह्मा, विष्णु, महेश्वरस्वरूपको कृपा आशीर्वाद प्राप्त गर्नका लागि सिद्धाश्रम शक्ति केन्द्र नेपालले श्रावण महिनालाई 'श्री शिव गोरक्ष महोत्सव'को रूपमा मान्दै आएको हो । गत वर्षझैं यस वर्ष पनि सिद्धाश्रम शक्ति केन्द्रले श्रावण महिनामा विशेष हवन सञ्चालन गर्ने भएको छ । हामीले विगतमा गरेका दिव्य कार्यक्रमहरूको सफलताको परिणामस्वरूप नै सिद्धाश्रम शक्ति केन्द्रले यस्तो विशेष हवन कार्यक्रम गर्ने सौभाग्य प्राप्त गरेको छ । यसबाट आउँदा दिनहरूमा गोरक्ष निखिल शिष्यहरू असङ्ख्यरूपमा निर्माण हुनका लागि पूर्वाधार तयार हुनेछ ।

आउनुहोस्, हामी सबै मिली परमपूज्य सद्गुरुदेवप्रदत्त श्री शिव गोरक्ष महोत्सवमा सहभागी भई यसलाई भव्यरूपमा सम्पन्न गरौं ।

जय गुरुदेव !

## गुरु गोरखनाथ र श्रावण महिना

**शिवो गोरक्षरुपेण, योगशास्त्रं जुगापह ।**
**यमाद्यङ गै र्यथास्थाने, स्थापिता योगिनो ऽपिच ॥**

अर्थात्, भगवान् शिवले गोरक्षरूपमा योग र योगीहरूको रक्षा तथा सारा विश्वको कल्याणका लागि योगशास्त्रको सत्यता यम, नियम आदिद्वारा प्रमाणित गर्नुभएको छ । भगवान् शिवले आफ्नो गोरक्षस्वरूपमा रहेर नै विविध लीलाहरू धर्नुभयो । उहाँलाई भगवान् शिवका १०८ अवतारमध्ये सबैभन्दा प्रमुख अवतारको रूपमा लिइन्छ । चारै युगमा क्रियाशील एउटै शक्ति छ भने त्यो हो गोरक्ष शक्ति । शिवमा रहेका सम्पूर्ण सिद्धि, शक्तिहरू गोरक्षमा व्याप्त छन् भने श्री गोरक्षमा अन्तर्निहित शक्तिहरू श्री शिवमा छन् । भगवान् शिवलाई प्रसन्न पार्नु भनेको गोरक्षनाथलाई प्रसन्न पार्नु हो, शिवलाई पुज्नु भनेको श्री गोरक्षनाथलाई पुज्नु हो । सम्पूर्ण शिवतत्त्व गुरुरूपी गोरक्षनाथको माध्यमबाट भएर मात्र प्रवाहित हुन्छन् । भगवान् शिवले आफ्नो आत्मस्वरूपबाट गोरक्ष रूप लिनुभयो । त्यसैले गोरक्षलाई शिवगोरक्ष भनी सम्बोधन गरिएको छ । शिवपुराणको सप्तमअध्यायमा सृष्टिकर्ता ब्रह्माले श्री गोरक्षनाथलाई शिवको अवतार भनी वर्णन गर्नुभएको प्रसंग पनि स्मरणीय हुन आउँछ । यसरी भगवान् शिव र गुरु गोरखनाथ एक आपसमा पर्याय भएकोले सिद्धाश्रम शक्ति केन्द्रले श्रावण महिनालाई **श्री शिवगोरक्ष महोत्सव**को रूपमा मनाउँदै आएको हो । यस क्रममा विगत वर्षहरूमा भण्डारा लगाउने, अखण्ड मन्त्र हवन अनुष्ठान, गोरक्ष सुरक्षा मन्त्रजप, गुरु गोरक्षनाथको मन्त्र लेखन अनुष्ठान, उपत्यकामा रहेका मठ-मन्दिरहरूको सफाई आदि गरेर भव्यरूपमा मनाउँदै आइरहेको छ । यसवर्ष यस महिनालाई दिव्य हवन कार्यक्रमको साथ मनाइँदैछ । कार्यक्रममा सहभागी भएर आफ्नो अमूल्य जीवनलाई गुरु गोरख र गुरु निखिलको चरणमा अर्पित गर्न सबैलाई सादर अनुरोध छ ।

## श्रावण महिना विशेष हुनुको यस्तो कारण रहेको छ

पहिलो सोमबार, दोस्रो सोमबार, तेस्रो सोमबार र चौथो सोमबार- जो साधक यी चार सोमबारमा विशेष अभिषेक पूजा आदि सम्पन्न गर्छन्, ती आफ्ना पूर्वजन्मका दोषहरूबाट त मुक्त हुन्छन् नै, यसका अतिरिक्त यस जीवनमा पनि नयाँ जीवनशक्ति प्राप्त गर्दछन् ।

श्रावण महिनामा केवल सोमबारको महत्त्व मात्रै होइन, अन्य दिनहरूको पनि विशेष महत्त्व छ । जीवनयापनका लागि पारिवारीक सुख, शान्ति, गृहस्थ अनुकूलता आवश्यक छन् । जसको जीवनमा ज्ञान हुन्छ, उसले आफ्नो जीवनमा विशेष प्रगति गर्दछ । जब ज्ञान र कर्म साथमा हुन्छन्, तब लक्ष्मीको आगमन हुन्छ । यसका अतिरिक्त सम्पत्तिको स्थायित्व आवश्यक छ भने त्यसको साथै सम्पूर्ण जीवनमा तेजस्विता प्राप्ति पनि आवश्यक छ । यसका लागि वेदहरूमा श्रावण महिनाको प्रत्येक दिवसको विशेष पूजा विधानको रचना भएको पाइन्छ । रुद्र संहितामा श्रावणका सात दिनको विवेचना यसप्रकार भएको पाइन्छ–

**श्रावण सोमबार–** श्रावण महिनाको प्रत्येक सोमबार शिव पूजन र अभिषेकको दिवस हो ।

**श्रावण मङ्गलबार–** यस दिन गृहस्थ सुख शान्तिको लागि महिला तथा पुरुषद्वारा मङ्गलागौरीको साधना तथा पूजा गरिन्छ । कुमारी कन्याहरूले यो दिन पूजा गर्नाले उनीहरूलाई विवाहसम्बन्धी शीघ्र अनुकूलता प्राप्ति हुन्छ । भगवान् शिवकी आद्याशक्तिले जसरी साधनाद्वारा आफ्ना प्रेमस्वरूप शिवलाई प्राप्त गर्नुभयो त्यसरी नै यस दिन मङ्गलागौरी साधना गर्नाले प्रेम सम्बन्धमा इच्छित अनुकूलता मिल्दछ ।

**श्रावण बुधबार–** यो दिवस भगवान् श्रीकृष्ण र भगवान् विष्णुको विठ्ठलरूपलाई समर्पित दिन हो । अत: यस दिन कृष्ण साधना, विष्णु साधना गर्नाले जीवनमा श्रेष्ठता आउँछ ।

**श्रावण गुरुबार–** बुद्धि र ज्ञानका ग्रह-नक्षत्र बुध र गुरु (वृहस्पति) मानिन्छन् । जो साधकको जीवन बुद्धि र ज्ञानयुक्त हुन्छ, उसले निरन्तर प्रगति गर्दछ । यी दुवै ग्रहको विशेष पूजा, साधना श्रावण गुरुबारका दिन सम्पन्न गरिन्छ । यसका साथै श्रावण महिनाको गुरुबारका दिन आफ्नो गुरुको पूजन पनि विधिविधानसहित सम्पन्न गर्नुपर्दछ ।

**श्रावण शुक्रबार–** संसारमा लक्ष्मीको आवश्यकता कसलाई पर्दैन र ! लक्ष्मीको आगमनमा पनि वैराग्य भाव रहोस् भन्नाका लागि श्रावण शुक्रबारका दिन लक्ष्मी र तुलसीको पूरा विधि-विधानसहित पूजा गरिन्छ । जुन घरमा तुलसीलाई जल अर्पण गरिन्छ र पूजामा तुलसी पत्र चढाइन्छ, त्यस घरमा सदैव लक्ष्मीको वास हुन्छ ।

**श्रावण शनिबार–** श्रावण महिनाको शनिबारलाई 'सम्पत' शनिबार भनिन्छ । शनि नै विशेष प्रतिष्ठा र स्थायी सम्पत्ति दिने ग्रह हुन् । शनिका साधकलाई जीवनमा बाधाहरूको सामना गर्नु पर्दैन । शनि स्थायी सम्पत्तिका पनि स्वरूप हुन् । जब जीवनमा शनि अनुकूल हुन्छन् तब स्थायी सम्पत्ति अर्थात् भवन, भूमि, वाहन आदिको प्राप्ति हुन्छ । शनिदेव भगवान् शिवका विशेष भक्त हुन् । श्रावण महिनामा शनि साधना गर्नाले तत्काल लाभ प्राप्त हुन्छ ।

**श्रावण रविवार–** जीवनमा सबैभन्दा बढी तेजस्विता र शक्ति प्रदान गर्ने ग्रह सूर्य हुन् । जसले नित्य सूर्यलाई जल अर्पित गर्छ, उसलाई जीवनमा विशेष शक्ति प्राप्त हुन्छ । वैज्ञानिक आधारमा पनि पुष्टि भइसकेको छ कि उदाउँदो सूर्यको किरण स्वास्थ्यका लागि विशेष पुष्टिकारक हुन्छ र यसबाट आरोग्यता प्राप्त हुन्छ ।

# गुरु गोरखनाथ को हुनुहुन्छ ?

**–गर्ग ऋषि तथा भगवान् श्रीकृष्ण संवाद**

*भगवान् श्रीकृष्ण र गर्ग ऋषिबीच गुरु गोरखनाथसम्बन्धी भएको कुराकानीको प्रसंगलाई यहाँ उल्लेख गरिएको छ। भगवान् श्रीकृष्ण भन्नुहुन्छ- 'गुरु गोरखनाथ को हुनुहुन्छ ? कुन मन्त्रबाट उहाँको पूजा गरिन्छ ? र उहाँको उपासना गर्ने विधि-विधान के छ ?'*

*गर्ग ऋषिले भन्नुभयो- 'हे कृष्ण ! जुन कुरा तपाईंले मलाई सोध्नुभयो, यही कुरा पूर्वकालमा श्री महादेवसँग ऋषिमुनिहरू तथा देवीदेवताहरूले गोरक्षनाथजीको बारेमा सोध्नुभएको थियो ।'*

*महादेवले भन्नुभयो- 'हे देवताहरू, हे मुनिहरू ! उहाँ गोरक्षनाथ हुनुहुन्छ, स्वयं ज्योतिस्वरूप हुनुहुन्छ, स्वप्रकाशदेव हुनुहुन्छ जसको प्रादुर्भाव पहिले अति चित्ताकर्षक वनमा भएको थियो । उहाँ जब स्वेच्छाले प्रादुर्भूत हुने इच्छा राख्नुहुन्छ भने देश तथा समयको भेदबाट स्वेच्छित रचना रच्नुहुन्छ अर्थात् जहाँ आफूले चाह्यो त्यहीं आफ्नो इच्छानुसारको वातावरण तयार गरी प्रादुर्भूत हुनुहुन्छ ।*

*हे देवताहरू ! सत्य यो हो कि यो परम पुनीत निखिल मायाजालरहितस्वरूप नै मेरो परम स्वरूप हो । योग प्रचार आदि कार्यका लागि नै म यो स्वरूप धारण गर्दछु ।*

## श्रावण महिनामा पर्ने चाडपर्वहरू

| | |
|---|---|
| श्रावण १ गते | **तान्त्रोक्त वटुक भैरव हवन,** |
| | **तान्त्रोक्त गणपति हवन,** |
| | **तान्त्रोक्त चण्डेश्वरी हवन** |
| श्रावण २ गते | **तान्त्रोक्त महालक्ष्मी हवन,** |
| | **तान्त्रोक्त विन्ध्यवासिनी हवन** |
| श्रावण ३ गते | **तान्त्रोक्त बगलामुखी हवन,** |
| | **तान्त्रोक्त वेदव्यास हवन** |
| श्रावण ४ गते | हरिशयनी एकादशी |
| | (तुलसी रोपण) |
| श्रावण ५ गते | **तान्त्रोक्त बाघभैरव हवन** |
| श्रावण ६ गते | **दिव्य गुरु महोत्सव** |
| श्रावण ७ गते | **विशेष हवन–श्री शिवगोरक्ष हवन** |
| | (मृगस्थली गोरक्ष शक्तिपीठ) |
| | **गुरु पूर्णिमा** |
| श्रावण १४ गते | **विशेष हवन** |
| | (वनकालीको गोरखनाथ मन्दिर) |
| श्रावण १५ गते | गोरखकाली पूजा |
| श्रावण १८ गते | कामिका एकादशी |
| श्रावण २१ गते | **विशेष हवन** |
| | (थापाथलीको गोरखनाथ मन्दिर), |
| | गठेमङ्गल (घण्टाकर्ण) |
| श्रावण २७ गते | नागपञ्चमी |
| श्रावण २८ गते | **विशेष हवन** |
| | (काष्ठमण्डपको गोरखनाथ मन्दिर), |
| | कल्कि जयन्ती |
| श्रावण २८ गते | गोरखकाली पूजा |

**प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजे- गुरू पूजन**
**प्रत्येक दिन साँझ ५:०० बजे- आरती**

# गोरखनाथाष्टकम्

अष्टाङ्गयोगनिधि अन्ध विनाशकर्ता ।
वेदान्तसार सुख साधक क्लेश हर्ता ॥
त्रिशूल धृक् शिव-मृड-करुणा करेश ।
वन्दे समस्त गुरु गोरखनाथ तुभ्यम् ॥
॥१॥

भिषक् परात्पर महेश्वर सर्व व्यापी ।
ॐ कार रूप प्रणवात्मक ध्यानगम्य ॥
दाता दयाकर सनातन धर्म धाम ।
धेयः महापुरुष गोरखनाथ तुभ्यम् ॥
॥२॥

बद्धोस्मि हे पशुपते ! जगमोहजाले ।
हे नाथ ! मामपिविलोकय दीनवन्धो ॥
तापं मदीय मनसोहर अक्षमाली ।
वन्दे महापुरुष गोरखनाथ तुभ्यम् ॥
॥३॥

आनन्दरूप ध्रुव-ताण्डव नृत्यकारी ।
इष्टो विशिष्ट जगपालक हे कपाली ॥
दिग्वस्त्रकाय विधु-भास्कर अग्नि नेत्र ।
धेयः महापुरुष गोरखनाथ तुभ्यम् ॥
॥४॥

व्याघ्राम्वरा श्रवण दर्शन दर्शनीय ।
आनन्दमूल अखिलेश्वर अप्रमेय ॥
सर्वोत्तमोत्तम प्रभा भवरोग हारी ।
वन्दे महापुरुष गोरख नाथ तुभ्यम् ॥
॥५॥

संपूर्ण शास्त्रमय श्री अवधूत सिद्ध ।
योगेश योगविषयातिव सु-प्रसिद्ध ॥
गोर्खेश हे ! सकल कारण शान्त मूर्ते !
धेयः समस्त गुरु गोरखनाथ तुभ्यम् ॥
॥६॥

स्वयं प्रकाश शुभ स्वस्तिदः षट् गुणेश ।
कल्याणदा अभयदा शिव ज्ञान गम्य ॥
ब्रह्मादिदेव वर वन्दित साधु-साध्य ।
वन्दे महापुरुष गोरखनाथ तुभ्यम् ॥
॥७॥

संसार-संप्लव विमोचन वन्दनीय ।
गोवंश रक्षक प्रवर्धक मूल त्राण ॥
विद्येश नर्तक-स्वतन्त्र अमोघ वीर्य ।
धेयः समस्त गुरु गोरखनाथ तुभ्यम् ।
॥८॥

**रचयिताः कवि नेत्रमणि आचार्य, गोरखा**

# गुरु पूर्णिमा

आषाढ शुक्ल पूर्णिमालाई गुरु पूर्णिमाको रूपमा मनाउने गरिन्छ। मानवजीवनमा यही मात्र एउटा यस्तो दिन हो जसले हामीलाई जीवनको बाटो देखाउने, हृदयस्थित अन्धकार हटाउन प्रयत्न गर्ने र हामीलाई पूर्णतासम्म पुऱ्याउनु हुने गुरुमा समर्पित हुनुपर्ने कुराको बोध गराउँछ। यस्तो दिव्य दिनमा उहाँको गुरु चरणमा विसर्जित हुनु नितान्तै आवश्यक हुन्छ किनभने शीतल छायाँरूपी गुरु चरणमा बस्ने र आफूलाई गुरु ज्ञानको सागरमा डुबाउने दिन नै केवल गुरु पूर्णिमा हो।

आजका मानिसहरू सबै कुराले सम्पन्न भएर पनि तनावग्रस्त र मानसिकरूपमा पीडित छ। जीवनमा ऊ लक्ष्यहीनताका साथ दौडिरहन्छ र यस दौडाइमा उसले पत्नी, छोराछोरी, घर, जमिन, धन, सम्पत्ति, वैभव आदि सम्पूर्ण कुरा प्राप्त गर्दछ तैपनि उसलाई मानसिक शान्ति भने हुँदैन, उसले आनन्दसँग बाँच्न पाइरहेको हुँदैन। जीवनमा केही अधुरोपन, खालीपनको महसुस भई नै रहन्छ र जबसम्म यो खालीपन भरिदैन तबसम्म मानसिक शान्ति पनि सम्भव हुँदैन जुन मानसिक शान्ति प्राप्त गर्न आजको सारा समाज तड्पिरहेको छ।

...र गुरु पूर्णिमा यसै उद्देश्य प्राप्तिका लागि हो किनकि पति र पत्नीबीच एकप्रकारको सम्बन्ध हुन्छ, मनुष्य र धनबीच छुट्टै किसिमको सम्बन्ध हुन्छ तर पवित्र आध्यात्मिक सम्बन्ध केवल गुरु र शिष्यबीच मात्र सम्भव हुन्छ। गुरुसँगको यही सम्बन्ध नै पछि गएर मानसिक शान्ति दिनमा समर्थ हुन्छ।

गुरु पूर्णिमाको दिनमा नै जीवनमा उच्चतर स्थिति प्राप्त गर्न सकिन्छ। जब हामी आफूले आफैंलाई चिन्न सक्छौं तब आफ्ना विशेषताहरूका साथसाथै जीवनका न्युनताहरू पनि थाहा पाउन सक्छौं। हाम्रो जीवनमा किन खल्लोपन, खालीपन, छटपटी छ ? यो छटपटी, खालीपन र मानसिक अशान्तिलाई कसरी हटाउन सकिन्छ भन्ने कुरालाई पनि बुझ्ने चेष्टा गर्न सक्छौं।

गुरु पूर्णिमा गुरुको दिन नभई शिष्यहरू परस्पर मिल्ने दिन हो। गुरु आफैंमा पूर्ण हुनुहुन्छ। पूर्ण नभई गुरु बन्न पनि सकिँदैन। त्यसैले गुरुलाई पूर्ण हुनुपर्ने कुनै आवश्यकता छैन। आवश्यकता छ भने केवल शिष्यलाई छ। त्यसैकारण यस दिनको सही नाम गुरु पूर्णिमा नभएर शिष्य पूर्णिमा हुनुपर्ने हो अर्थात् जुन दिवसले शिष्यलाई पूर्ण बनाउन सक्दछ, त्यसलाई नै शिष्य पूर्णिमा भनिन्छ। शिष्यका दुई अर्थहरू छन्; एउटा हो– नजिक जानु, सामीप्य प्राप्त गर्नु अर्थात् आफूलाई गुरुमा समाहित गरिदिनु र अर्को हो- 'शक्ति'। यो शक्ति आत्मशक्ति पनि हुन सक्छ, आध्यात्मिक शक्ति पनि हुन सक्छ जुन हामीभित्र सुषुप्त अवस्थामा रहेको हुन्छ। त्यसैले यसलाई चिन्नु छ, जगाउनु छ, उपयोग गर्नुछ र ऊर्ध्वमुखी गराएर दुवै आँखीभौंको बीचमा स्थापित गर्नुछ। गुरु पूर्णिमाकै दिनमा दुवै आँखीभौंका बीचमा टीका लगाएर गुरुले यो कुरा बताउनुहुन्छ कि यही नै त्यो स्थान हो जहाँ तिमीले आफ्नो शक्ति केन्द्रीत गर्नु छ जसले गर्दा पछि गएर उक्त शक्ति सम्पूर्ण विश्वमा छाउन सकोस्, तिम्रो तेस्रो नेत्र जागृत हुन सकोस् र जीवनको अधुरोपनलाई पूर्णता दिन सकोस्।

गुरु पूर्णिमा आफूले आफैंलाई चिन्ने दिन हो। यसभन्दा पनि अगाडि बढेर तपाईंभित्र सुषुप्त अवस्थामा रहेको जुन शक्ति छ, जसलाई कसैले दिव्य शक्ति, कसैले कुण्डलिनी शक्ति र कसैले आध्यात्मिक शक्ति भन्ने गर्दछन्, त्यसलाई चिन्नुपर्ने आवश्यकता छ र गुरु नै यो शक्ति जागृत गर्नमा सहायक हुनुहुन्छ। जो अन्धकारबाट प्रकाशतर्फ लान सक्षम, साधना, संयमता, तपस्या र आत्मविश्वासका आधार हुनुहुन्छ, यदि यस्ता गुरुमाथि विश्वास गरेर उहाँको मार्गमा हिँड्नुहुन्छ भने अवश्य नै तपाईं त्यस गन्तव्यमा पुग्नुहुनेछ जुन तपाईंको जीवनको अभीष्ट हो, लक्ष्य हो र यही अभीष्ट प्राप्ति गर्ने दिन नै गुरु पूर्णिमा हो। एकातिर अशान्ति, भय, दुःख र चिन्तारूपी पहाडहरूले तपाईंको मार्ग अवरुद्ध गरिरहेछन् भने अर्कोतिर सत्य, आनन्द र पूर्णतारूपी सागर तपाईंको प्रतीक्षामा लहराइरहेछ। अब यिनै वासनात्मक मायाजाल, अशान्ति र भयरूपमा अल्झिरहने हो वा शान्ति, करुणा र प्रेमरूपी समुन्द्रमा हामफाल्ने हो, यो त तपाईंमा नै निर्भर छ।

गुरु पूर्णिमा त तपाईं आफ्नो घरमा पनि मनाउन सक्नुहुन्छ। दर्शन प्राप्त गर्नु नै पूर्णिमाको अर्थ हो र गुरुको दर्शन घरमै बसेर, ध्यान गरेर पनि प्राप्त गर्न सक्नुहुन्छ। तर तपाईंलाई त शिष्य पूर्णिमामा भाग लिनु छ जहाँ तपाईंजस्ता सयौं-हजारौं गुरुदाइ, गुरुभाइ तथा दिदी-बहिनीहरू उपस्थित हुन्छन्। सबैजना एउटा विशेष मार्गमा गतिशील हुनका लागि प्रस्तुत हुन्छन्। उनीहरूको बीचमा रहनु र आफूलाई गुरु सामु विसर्जित गर्नुमा नै तपाईंको कल्याण छ।

गुरुको स्वरूप तीन प्रकारको हुन्छ- स्थूल, सूक्ष्म र आत्मदर्शी। स्थूलस्वरूपमा उहाँ हामीजस्तै भौतिक शरीर धारण गरेर खाने, बस्ने, उठ्नेजस्ता लौकिक व्यवहार गर्नुहुन्छ तर पनि उहाँको विचारमा अधिक संयम, त्याग, विवेक र तेजस्विता भरिएको हुन्छ। सूक्ष्मरूपमा गुरुले आफ्नो शिष्यमा बौद्धिक चेतना प्रवाहित गर्नुहुन्छ, उसको मस्तिष्कमा रहेका विभिन्न शंकाहरू समाधान गर्नुहुन्छ र उसको मानसपटलमा आफ्ना विचारलाई प्रवाहित गरिदिनुहुन्छ र उक्त अन्जान शिष्य जब त्यस विचार प्रवाहलाई स्वीकार गर्दै अगाडि बढ्छ तब उसले आफूभित्रै गुरु बस्नुभएको देख्दछ। यही नै गुरुको सूक्ष्म रूप हो।

गुरुको तेस्रो रूप हो- आत्मदर्शी। कुनै शिष्य पूर्वजन्ममा पनि उही गुरुको शिष्य भएर पनि योगभ्रष्ट भएका कारण गलत पथमा अग्रसर हुनसक्छ। अब यस जन्ममा आफ्नो सम्पर्कमा आउनेबित्तिकै गुरुले उसलाई चिनेर आफ्नो चेतनाले उसको हृदय र आत्मालाई पक्डिनुहुन्छ र आफूतर्फ खिच्नुहुन्छ र शिष्य चुम्बकले फलाम तानेझैं तानिन पुग्छ। यही नै गुरुको आत्मदर्शीस्वरूप हो र यो खिचिनु, आकर्षित हुनु, गुरुमा एकाकार हुनु पनि यसै शिष्य पूर्णिमा पर्वमा सम्भव हुन्छ।

गुरु सामान्यरूपमा नै शिष्यको सम्पर्कमा आउनुहुन्छ तर त्यसै एक झट्काले शिष्य गुरुतिर खिचिन पुग्छ, गुरुमा नै एकाकार हुन लालायित हुन्छ र त्यस समयमा उसले माता-पिता, बन्धु-बान्धव, लोक-व्यवहार र सामाजिक मर्यादाहरूलाई कुनै वास्ता गर्दैन किनकि गुरुलाई देख्नेबित्तिकै उसका पूर्व जीवनका तरङ्गहरू विद्युत्‌रूपमा तीव्रताका साथ शरीरमा प्रवाहित हुन थाल्दछन्, सारा शरीर नै विद्युत्मय भएर निमग्न हुन पुग्छ र गुरुमा एकाकार हुन पुग्छ।

गुरु सान्निध्यता प्राप्त गर्न, उहाँमै समाहित हुन तथा ब्रह्मानन्दको परमानुभूति गर्न यसै पावन दिवसदेखि दृढ सङ्कल्पित होऔं र गुरु चरण प्राप्तिको मार्गमा पहिलो पाइला अगाडि सारौं।

जय गुरुदेव !

गुरुकृपा वर्षिरहोस्, खुदी आश्रम फलोस् फुलोस्
सद्‌गुरुको आशीर्वाद सधैं भइरहोस् ।

**परमपूज्य सद्‌गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको कृपा, अनुकम्पास्वरूप कास्की, लेखनाथ-१२ खुदीमा गुरु आश्रम भवन निर्माण गर्न सफल भएकोमा यस पुनीत कार्यमा सहयोग गर्ने सम्पूर्णलाई हार्दिक धन्यवाद दिँदै आश्रमको उत्तरोत्तर प्रगतिको कामना गर्दछौं।**

**लक्ष्मण बराल, सावित्री बराल, छोरी एरिसा बराल**
**पोखरा-८, सृजनाचोक**

## गोरखवाणी

**उलटै मूल डाल नही रहै।**
**फाडि कछौटा रात्यौं बहै॥**
**न वोह छीजै ला वोह गलै।**
**ब्यंद नहीं सो भगमुष ढलै॥**

बिन्दुको साधना वीर्यको रससिद्धि योग साधनाको एक आवश्यक अंग हो। जसको सिद्धि प्राप्ति हुनाले अमरकायत्व एवं ब्रह्मानुभूतिको प्राप्ति हुन्छ। जुन वीर्य कामयोगमा, संभोग सुखमा खर्च गरिन्छ त्यो वीर्य अपक्व र निस्सार वीर्य हो, जसबाट योगी सिद्धिबाट वञ्चित रहन्छ। यस वीर्यलाई उर्ध्वगामी गराई मूल उद्‌गमबाट नै अर्कोतर्फ परिणत गर्न सके कामोपभोग परायणताजन्य चञ्चल मानसिक वृत्तिहरू नाश हुन्छन्। यही वीर्य ऊर्ध्वमुखी हुनाले योगीले वस्त्र त्याग दिनाले, कामोपभोगरूपी वस्त्र उतार दिनाले,ध निरावरण दिगम्बर हुनाले ऊर्ध्वमुखी हुन्छ, यो न गल्छ, न ढल्छ, न क्षीण हुन्छ, न त नष्ट नै हुन्छ। यो पक्व अर्थात् सिद्ध वीर्य ब्रह्मानुभूतिको माध्यम हुन्छ।

## सिद्धाश्रम शक्ति केन्द्रका सम्पर्क कार्यालयहरु

- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर
  फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी,
  फोन: ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**, पो.उ.म.न.पा.-१०, रामघाट,
  फोन: ०६१-५३०७८६
- **सर्लाही**,बरहथवा-७, एस्माली टोल,
  फोन: ०४६-५४००११
- **पाल्पा**, तानसेन, फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल, फोन:२२२००२१
- **गोरखा**, बसपार्क, फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा, फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेंसीशहर, भीमसेनटोल
- **भक्तपुर**, कटुन्जे-१, फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, न.पा. कार्यालय पछाडि
  फोन: ०१-६६२५१७२
- **कास्की**, लेखनाथ चोक, फोन: ०६१-२२९१९०
- **सिन्धुली**, रातमाटा फोन: ९८४४०४०८९९
- **स्याङ्जा**, स्याङ्जाबजार
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, बिन्ध्यवासिनी
- **काठमाडौं**, पुरानो बानेश्वर, फोन: ०१-४४६४५४७
- **काठमाडौं**, सिमलटार
- **काठमाडौं**, तीनकुने (मुनिभैरव), फोन: ०१-६९१२८२७
- **ललितपुर**, गोदावरी

# नागपञ्चमी

वेद र पुराणहरूमा नागको उद्‌गम महर्षि कश्यप र उहाँकी धर्मपत्नी कद्रूबाट भएको मानिन्छ । नागको मूल स्थानको रूपमा पाताललोक प्रसिद्ध छ । पुराणमा नागलोकको राजधानीको रूपमा भोगवतीपुरी विख्यात् छ । संस्कृत कथा साहित्य 'कथासरित्सागर' नागलोक र त्यहाँका बासिन्दाको कथाहरूले ओतप्रोत छ । गरुडपुराण, भविष्यपुराण, चरकसंहिता, सुश्रुतसंहिता, भावप्रकाश आदि ग्रन्थहरूमा नागसम्बन्धी विविध विषयको उल्लेख गरेको पाइन्छ । पुराणहरूमा यक्ष, किन्नर र गन्धर्वको वर्णनका साथ नागको पनि वर्णन पाइन्छ भने स्वयं परब्रह्म परमात्मा महायोगी सद्‌गुरु गोरखनाथले विभिन्न समयमा नागका आसन जमाई तपस्या गर्नुभएको प्रसंगले पनि नागको महिमा अझ बढ्‌न गएको छ । भगवान् विष्णुको शैय्याको शोभा शेषनागराजले बढाइदिनुभएको छ । भगवान् शिव र गणेशको अलंकारमा पनि नागको महत्त्वपूर्ण भूमिका छ । योगसिद्धिका लागि जसले कुण्डलिनी शक्ति जागृत गर्दछ, त्यसलाई सर्पिणी भनिन्छ । पुराणमा भगवान् सूर्यको रथमा द्वादश नागको उल्लेख भएको पाइन्छ जुन क्रमश: प्रत्येक मासमा उहाँको रथको वाहक बन्दछ । यसप्रकार अन्य देवताहरूले पनि नाग धारण गर्नुभएको छ । त्यसैले नागलाई सर्वत्र देवताको रूपमा स्वीकार गरिएको छ ।

कश्मिरका प्रसिद्ध संस्कृत कवि कल्हणले आफ्नो प्रसिद्ध पुस्तक 'राजतरंगिणी'मा कश्मिरको सम्पूर्ण भूमि नागका लागि पवित्र मान्नुभएको छ । त्यहाँको प्रसिद्ध नगरको नामाकरण नै अनन्तनाग हुनु यसको ऐतिहासिक प्रमाण हो । पूर्वीय संस्कृतिमा साँझ-बिहान भगवत्स्मरणको साथै अनन्त तथा वासुकि आदि पवित्र नागहरूको नाम पनि स्मरण गरिन्छ जसबाट नागविष, भयबाट रक्षा हुने र सर्वत्र विजय हुने विश्वास छ ।

**अनन्तं वासुकिं शेषं पद्मनाभं च कम्बलम् ।**
**शंखपालं धार्तराष्ट्रं तक्षकं कालियं तथा ॥**
**एतानि नव नामानि नागानां च महात्मनाम् ।**
**सायंकाले पठेन्नित्यं प्रातः काले विशेषतः ॥**
**तस्मै विषभयं नास्ति सर्वत्र विजयी भवेत् ॥**

देवी भागवत्‌मा प्रमुख नागको नाम नित्य स्मरण गरिएको छ । हाम्रा ऋषिमुनिहरूले नाग उपासनाका लागि अनेक व्रत र पूजनका विधि प्रदान गर्नुभएको छ । श्रावण मासको शुक्ल पक्षको पञ्चमी नागका लागि अत्यन्त आनन्ददायक दिन हो- 'नागानामानन्दकरी' पञ्चमी तिथिको नागपूजामा उहाँहरूलाई गाईको दूधले स्नान गर्ने विधान छ । भनिन्छ कि एकपटक मातृ श्रापले नागलोक जल्न लाग्यो । यस दाहपीडाको निवृत्तिको लागि नागपञ्चमीमा गाईको दूधले स्नान गर्ने गरिन्छ जसले नागलाई शीतलता प्रदान गर्दछ । यसबाट भक्तलाई पनि सर्पको डरबाट मुक्ति मिल्छ । यसै क्रममा नागपञ्चमीको सन्दर्भमा रहेको एउटा रोचक कथा छ जसको श्रवणको श्रावण महिनामा ठूलो महत्त्व छ ।

एकपटक देवता र असुरले समुन्द्रमन्थनद्वारा चौध रत्नमा उच्चै:श्रवा नामक अश्वरत्न प्राप्त गर्नुभएको थियो । यो अश्व अत्यन्त श्वेतवर्णको थियो । त्यसलाई देखेपछि नागमाता कद्रु तथा विमाता विनता दुवैबीच अश्वको रंगको सम्बन्धमा वादविवाद भयो । कद्रुले भनिन्, 'अश्वको केश कालो वर्णको छ । यदि आफ्नो कथनमा असत्य सिद्ध भएमा म तिम्रो दासी बन्छु अन्यथा तिमी मेरी दासी बन्नुपर्छ ।' कद्रुले नागलाई कपालजस्तै सूक्ष्म बनेर अश्वको शरीरमा आवेष्ठित हुन निर्देशन दिइन्, तर नागले आफ्नो असमर्थता प्रकट गरे । यसबाट क्रुद्ध भई कद्रुले नागलाई श्राप दिइन् कि पाण्डव वंशको राजा जनमेजयले नागयज्ञ गर्नेछ, त्यही नागयज्ञमा तिमीहरू सबै जलेर भस्म हुनु परोस् । नागमाताको श्रापबाट भयभीत नागहरूले वासुकीको नेतृत्वमा ब्रह्माजीसँग श्राप निवृत्तिको उपाय सोध्दा ब्रह्माजीले निर्देशन दिनुभयो– 'यायावर वंशमा उत्पन्न तपस्वी जरत्कारु तिमीहरूकी बहिनी हुनेछिन् । उनको छोरा आस्तीकले तिमीहरूको रक्षा गर्नेछ ।' भगवान् ब्रह्माले पञ्च तिथिमा नागहरूलाई यो वरदान दिनुभयो तथा यसै तिथिमा आस्तीकमुनिले नागको परीक्षण गर्नुभएको थियो । त्यसकारण नागपञ्चमीको यो व्रत ऐतिहासिकरूपले महत्त्वपूर्ण छ । नागपञ्चमीको दिनमा व्रतको साथ एकपटक भोजन गर्ने नियम छ । पूजा गर्दा पृथ्वीमा नागको चित्राङ्कन गरिन्छ । त्यसैगरी सुन, चाँदी वा काठको नाग बनाएर फूल, धूप, दीप एवं विविध नैवेद्यहरूले नागको पूजन गरिन्छ । नाग पूजनमा निम्नलिखित मन्त्रको उच्चारण गर्दै नागलाई प्रणाम गरिन्छ ।

**सर्वे नागाः प्रीयन्तां मे ये केचित् पृथिवीतले ॥**
**ये च हेलिमरीचिस्था येऽन्तरे दिवि संस्थिताः ।**
**ये नदीषु महानागा ये सरस्वतिगामिनः ।**
**ये च वापीतडागेषु तेषु सर्वेषु वै नमः ॥**

यस श्लोकको भाव यही हो कि जो नाग पृथ्वी, आकाश, स्वर्ग, सौर्यकिरण, सरोवर तथा तलाउ आदिमा निवास गर्नुहुन्छ, उहाँहरू हामीदेखि प्रसन्न भइदिनुहोस्, हामी उहाँहरूलाई बारम्बार नमस्कार गर्दछौं ।

प्राणीशास्त्रका अनुसार नागका अनेक जाति र प्रजातिहरू छन् जसमा विषधारी नागको सङ्ख्या ज्यादै कम छ । भविष्यपुराणमा पनि नागको लक्षण, नाम, स्वरूप र जातिको विस्तारबारे वर्णन गरिएको पाइन्छ जसमा मणिधारी तथा इच्छाधारी नागको पनि उल्लेख गरिएको पाइन्छ । नागपञ्चमी पर्वले नागहरू एवं अन्य जीवहरूप्रति सम्मान, सम्बर्द्धन एवं उनीहरूको संरक्षणको लागि प्रेरणा दिन्छ । यो पर्व प्राचीन समयअनुरूप आज पनि हाम्रो अन्तर्दृष्टिमा उत्तिकै आवश्यक एवं प्रासंगिक छ ।

हाम्रो कृषि सम्पदाको नाश गर्ने जीवहरूबाट रक्षाका साथै पर्यावरण रक्षा र वन सम्पदामा पनि नागको महत्त्वपूर्ण भूमिका रहेको छ भने आध्यात्मिकरूपमा पनि नागको महत्त्व धेरै ठूलो छ । नागको कृपा, आशीर्वाद प्राप्त गर्न सकेमा हाम्रा भौतिक एवं आध्यात्मिक उन्नति, प्रगति सहजरूपमा हुन सक्छ तर त्यो त्यति सहज छैन ।





# आरती संचालन केन्द्र खुदी

## -संक्षिप्त परिचय-

-ऋषिराम सापकोटा

उत्तरमा माछापुछ्रे हिमाल, अन्नपूर्ण हिमाल त्यसपछि हरिया पहाडका शृंखला, पूर्व-पश्चिम-दक्षिण पहाड र हिमालले घेरिएको उपत्यका मानौं प्रकृतिले फुर्सद लिएरै सिर्जिए जस्तो ठाउँ पोखरा उपत्यकाभित्रकै पो.न.पा. सँगै जोडिएको लेखनाथ न.पा., जसलाई सात तालको बगैँचा सहर भनेर चिनिन्छ, त्यसमध्येकै वडा नं. १२ स्थित खुदीलाई सोता बगैँचा भनेर चिनिन्छ । यहाँ किरातेश्वर मन्दिर निर्माण भई पूजाआजा भइरहेको छ । उक्त परिसरकै नजिक (शिवालयकै नजिक) आश्रम भवनमा परमपूज्य सद्‌गुरुदेवहरूको आरती हुने गर्दछ । परमपूज्य सद्‌गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको छत्रछायाँमा संचालित आश्रम भवनमा आरती गाउने सौभाग्य प्रदान भई सबैलाई मुक्तिको मार्ग प्रशस्त भएको छ ।

खुदीको आश्रम भवन करिब पूरा भइसकेको छ । यसमा १२×३० फिटको आरती हल, ७×१० फिटको भान्छा, ९×११ फिटको भण्डारण कोठा, ४×६को स्नान कक्ष, १०×१८ फिटको वरण्डा र अगाडि सम्म पारिएको मैदानसहितको आश्रम भवन निर्माण भइसकेको छ ।

यहाँका स्थानीय भक्तजन, सिद्धाश्रम शक्ति केन्द्रका नेपालभरिकै साधकसाधिका कार्यकर्ताहरू सम्पूर्णको सहयोग र सद्‌भावले बनेको खुदी आश्रम भवनको भावी भविष्य सद्‌गुरुदेवहरूले पक्कै पनि राम्रो हुने देखेर होला, हामी सबैमा उत्साह, उमंग, जोश र जाँगर भरी आश्रम बनाउन खटाउनुभयो किनभने कास्कीकै शैक्षिक क्षेत्रले चिनिने यो ठाउँ धार्मिक क्षेत्रले पनि चिनिने भइसकेको छ । पश्चिमाञ्चलकै क्षेत्रीय विश्वविद्यालय, पोखरा विश्वविद्यालयका प्राय: सम्पूर्ण क्रियाकलाप यहीँबाटै सञ्चालन हुन्छन् । गोरक्ष शक्तिपीठ पनि यहाँबाट नजिक पूर्वतर्फ छ । दक्षिण-पश्चिमतर्फ राम मन्दिर बनेको छ र यहाँ भक्तजनहरूको राम्रो उपस्थिति हुने गर्दछ । यसरी विविध कुराहरूले परिपूर्ण भएको यस थलोलाई सद्‌गुरुदेवहरूले चयन गरिदिनुभएको र सम्पूर्ण साधकसाधिका, भक्तजन, स्थानीय भद्र भलादमीहरूको सहयोग र सद्‌भावले निर्माण भएको यस आश्रम भवनमा हप्तैभरि गुरु आरती गर्न पाइयोस् भन्ने सबै साधकसाधिकाहरूको आकांक्षाको परिपूर्ति चाँडै होस् भनी परमपूज्य सद्‌गुरुदेवहरूको श्रीचरणकमलमा प्रार्थना गर्दछौं ।

### खुदी आश्रममा आबद्ध साधकसाधिकाहरू:

लक्ष्मी पौडेल, ऋषिराम सापकोटा, विष्णु न्यौपाने, राजकुमारी गुरुङ, लीला खड्का, रीता थापा, गंगा पौडेल, सुशिला ढकाल, प्रमिला ढकाल, कल्पना ढकाल, नमा खाँण, भुपेन्द्र खाँण, सुमित्रा खाँण, भुषण खाँण, प्रतिभा सापकोटा, सरस्वती अधिकारी, लीला अधिकारी, सावित्री अधिकारी, सरिता खत्री, लक्ष्मी ढकाल 'क', लक्ष्मी ढकाल 'ख', मीना ढकाल, सरस्वती खनाल, सुमित्रा कँडेल, विष्णु अधिकारी, तिला सापकोटा, चन्द्रकुमारी पौडेल, राधा पौडेल, कृति बराल, जगन्नाथ पौडेल, कल्पना गोदार, जगतकुमारी भण्डारी ।

### सल्लाहकार:

| | |
|---|---|
| विदुर सापकोटा | ले.न.पा.–१२, खुदी |
| डिल्लीराम पौडेल | ले.न.पा.–१२, खुदी |
| विष्णु सापकोटा | रामघाट–१०, पोखरा |
| तारा अधिकारी | ले.न.पा.–१२, खुदी |
| दुर्गाप्रसाद सुवेदी | ले.न.पा.–१२, ढुंगेपाटन |
| उमानाथ न्यौपाने | ले.न.पा.–१२, खुदी |
| पूर्णभद्र पोखेल | ले.न.पा.–१२, खुदी |
| विष्णुप्रसाद पोखेल | ले.न.पा.–१२, खुदी |

**विशेष सल्लाहकार**

सा.प. रामजी अर्याल (बसुन्धरा कैन्द्रीय आश्रम)
सा.मा. विन्ढेश्वरी बराल (बसुन्धरा कैन्द्रीय आश्रम)
मेघराज घिमिरे (संयौजक, रामघाट आश्रम)
राधा सापकौटा (संयौजक, लेखनाथ आश्रम)
बलराम पैंडेल (लेखनाथ आश्रम)
वृहस्पति सापकौटा (रामघाट आश्रम, पौ.उ.म.न.पा. १३)
यौगी बलभद्रनाथ (संरक्षक, शिव गौरक्षपीठ सिद्धाश्रम लेखनाथ ११, पचभैया)

## आरती केन्द्र खुदी गोरक्ष निखिल आश्रम भवन निर्माण समितिको नामावली

परमपूज्य सद्गुरुदेवहरु श्री श्री महायौगी गुरु गौरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको असीम कृपा एवं आशीर्वादस्वरुप प्राप्त भएको सिद्धाश्रम शक्ति कैन्द्र आरती संचालन कैन्द्र लेखनाथ-१२ खुदीको गौरक्ष निखिल आश्रम भवन निर्माण समिति मिति २०६८ चैत्र २८ गतेका दिन गठन भयो । यस समितिमा निम्न साधकसाधिकाहरु सम्मिलित हुनुहुन्छ–

| | |
|---|---|
| अध्यक्ष : | लक्ष्मी पैंडेल |
| उपाध्यक्ष : | राजकुमारी गुरुङ |
| सचिव : | ऋषिराम सापकौटा |
| सह-सचिव : | रिता थापा ढकाल |
| कौषाध्यक्ष : | नमा खाँण |
| सह-कौषध्यक्ष : | लक्ष्मी ढकाल (क) |
| सदस्यहरु : | प्रतिभा सापकौटा, गंगा पैंडेल, सुशिला ढकाल, कृष्णप्रसाद पैंडेल, कल्पना ढकाल, लीला खड्का । |

**सल्लाहकार**

विदुर सापकौटा, लै.न.पा. १२, खुदी
डिल्लीराम पैंडेल, लै.न.पा. १२, खुदी
विष्णु सापकौटा, रामघाट १२, खुदी
तारा अधिकारी, लै.न.पा. १२, खुदी
दुर्गाप्रसाद सुवेदी, लै.न.पा. १२, ढुंगेपाटन,
उमानाथ न्यौपाने, लै.न.पा. १२, खुदी
पूर्ण भद्र पौखेल, लै.न.पा. १२, खुदी,
विष्णु प्रसाद पौखेल, लै.न.पा. १२, खुदी

# उत्साहित भई कम्मर कसेर लाग्दाको परिणाम
# गोरक्ष निखिल आश्रम भवन

परमपूज्य सद्गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको कृपा एवं आशीर्वादले सिद्धाश्रम शक्ति केन्द्र आरती संचालन केन्द्र खुदीको गोरक्ष निखिल आश्रम भवनको निर्माण कास्की लेखनाथ न.पा. वडा नं. १२ खुदीको गहते सोता किरातेश्वर महादेव मन्दिर नजिकै बनाउने सौभाग्य प्राप्त गरेका छौं । परमपूज्य सद्गुरुदेवहरूलाई गुरु धारण गर्न पाउनु र आफ्ना सद्गुरुदेवहरूको आंशिक वा दैनिक आरती आफ्नै आरती भवनमा गर्न पाउनु हामी सम्पूर्ण आरती संचालन केन्द्र खुदीका साधकसाधिका एवं भक्तजनहरूको सौभाग्य हो । साथै, सिद्धाश्रम शक्ति केन्द्र नेपालमा आबद्ध हुनुभएका, यसमा आस्था राख्नुहुने सम्पूर्ण साधकसाधिका एवं भक्तजनहरूको गर्व र सौभाग्यको कुरा हो किनभने हामी शिष्यहरूको अभिभारा बनेको गुरुहरूको प्रचारप्रसार गर्नु, गुरुको महत्त्व जे जति जान्छौं बुझाउने र जति सक्दो असल शिष्यहरूको निर्माण गर्नु रहेको हुन्छ । सद्गुरुदेवहरूको महान् योजना 'गोरक्ष निखिल युग' निर्माण कार्यमा पक्कै पनि यस आश्रम भवनबाट इँटा थप्ने कार्य हुने भएकोले यो हामी सम्पूर्ण शिष्य, साधकहरूकै गौरव र सौभाग्य हो भन्ने हामीले ठानेका छौं ।

परमपूज्य सद्गुरुदेवहरूको असीम कृपा एवं आशीर्वाद तथा लेखनाथ-११, खुदीका सम्पूर्ण बासिन्दा, साधकसाधिका, भक्तजन, भद्र भलाद्मी, शुभ-चिन्तक, समाजका अग्रजहरूको प्रयासले किरातेश्वर

आश्रम भवन बन्दै गर्दाको अवस्था

मन्दिरदेखि दक्षिणतर्फ गोरक्ष निखिल आश्रम भवन बनाउन जग्गा उपलब्ध गराउने कार्यलगायत धेरै धेरै सहयोग गर्नुभयो यसका लागि सबै नै धन्यवादका पात्र हुनुहुन्छ । उक्त आश्रम भवनलाई करिब ०-८-०-० भन्दा बढी नै जग्गा उपलब्ध गराई सहयोग गर्नुहुने खुदी र खासै ठूलाढुंगा टोल विकास समितिका सम्पूर्ण सदस्य र अन्य भद्र भलाद्मीहरूप्रति हामी आभार प्रकट गर्दछौं । यो जग्गाको सम्बन्धमा पनि गोरक्ष निखिल आश्रम भगवान् शिवकै मन्दिर (शक्तिपीठ) को आडमा नै गुरुदेवहरू स्वयंले

नवनिर्मित आश्रम भवनमा साधकसाधिकाहरू

चयन गर्नुभएको भन्ने पनि हामीलाई लागेको छ किनभने यो आश्रम भवन अन्यत्र बनाउने भनी शिलान्यास पनि गरिएको हो तर गुरुदेवहरूलाई यो कुरा मन परेनछ क्यार र खुदीको सोताको पुछारको ठाउँमा बनाउन यस आरती संचालन केन्द्रका थुप्रै साधिकाहरूले उक्त ठाउँमा नै बनाउनु पर्छ भन्ने जोड, बल गर्नुभएको थियो । सद्गुरुदेवहरूको इच्छा नभए हामी साधारण मनुष्यको केही लाग्दो रहेनछ भन्ने अनुभव गरियो । अन्ततः २०६७ आश्विन ४ गते सोमबारका दिनदेखि विहीबार र सोमबार हप्ताको दुईपटक गुरु आरती संचालन गर्दै आएका थियौं । आरती गर्नका लागि भाडामा कोठा खोजी आरती संचालन गर्दै आएकोमा आफ्नै आरती भवन भए कति राम्रो हुने थियो होला भनी गुरुदेवसमक्ष पुकार गर्दा सद्गुरुदेवले सुन्नु भएछ क्यार, हामीलाई जग्गा उलब्ध भयो । फेरि भवन निर्माणका लागि बजेट शून्य नै थियो भन्दा हुन्छ । शून्य बजेटमा आश्रम बनाउने आँट गरी सबै साधकसाधिकाहरू कम्मर कसरे लागियो । सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय रामघाट, सम्पर्क कार्यालय लेखनाथले आश्रमको तर्फबाट संस्थागतरूपमा साथै व्यक्तिगतरूपमा धेरै धेरै सहयोग गर्नुभयो । हुन त यस आश्रमको अभिभावक संस्था नै लेखनाथ आश्रम, रामघाट आश्रम हो । भित्रै अन्तरआत्मादेखिकै सबैको सहयोग र माया र आर्थिक सहयोग र जिन्सी सहयोग गर्नुहुने सम्पूर्ण महानुभाव साधकसाधिका एवं भक्तजनहरूको सहयोग र सहानुभूतिबाट शुरुको शून्य बजेटबाट निर्माण कार्य शुभारम्भ भए पनि यस आश्रम भवनलाई यस अवस्थासम्म ल्याउन सफलता प्राप्त भएको छ । यसका लागि सम्पूर्ण सहयोगी दाता, साधकसाधिका एवं भक्तजनहरूमा सिद्धाश्रम शक्ति केन्द्र आरती संचालन केन्द्र खुदी हार्दिक आभार प्रकट गर्दै 'जय गुरुदेव !' को न्यानो अभिवादन अर्पण गर्दछ ।      जय गुरुदेव !

आश्रम भवन नजिकैको शिवालय

# साधना गरौँ साधकसाधिका बनौँ

विष्णु सापकोटा

परमपूज्य सदगुरुदेवहरूको कृपा एवं आशीर्वादस्वरूप स्थापना भएको सिद्धाश्रम शक्ति केन्द्र नेपाल आध्यात्मिक शक्ति अनुसन्धान संस्था हो । सिद्धाश्रम शक्ति केन्द्र गुरुहरूको रूपमा श्री श्री महायोगी गुरु गोरखनाथ र परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजलाई धारण गरेर अघि बढिरहेको एउटा विशुद्ध संस्था हो । श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज अद्वितीय गुरुहरू हुनुहुन्छ । श्री श्री महायोगी गुरु गोरखनाथलाई गोरक्षनाथ पनि भनिन्छ । गोरक्षनाथ शिवजीको प्रमुख अवतारको रूपमा पूजित हुनुहुन्छ । आमाको कोखबाट जन्म नभई पृथ्वीमाताको गर्भबाट आवश्यक परेको बेलामा प्रकट हुन सक्ने अजर, अमर श्री शिव गोरक्षनाथको बारेमा प्राचीन ग्रन्थहरूमा उल्लेख भएको पाइन्छ । गोरक्ष शब्दलाई पृथ्वी, इन्द्रिय र गाईको रक्षा गर्ने रक्षकको रूपमा शास्त्रहरूमा वर्णन भएको पाइन्छ ।

परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको महिमा अपरम्पार छ । मन्त्र, तन्त्र, आयुर्वेद, ज्योतिषजस्ता विधाहरूमा अग्रगन्य डा. नारायणदत्त श्रीमाली नै परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज हुनुहुन्छ । परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमाली मानवकल्याण र ऋषिमुनिहरूको धरोहरका रूपमा रहेका विभिन्न आध्यात्मिक विधाहरूको संरक्षण र संवर्द्धनका लागि यस धरतीमा आउनुभयो । उहाँ भारतको जोधपुरको खरंटिया गाउँमा जन्मनुभएको हो । समाजको लागि अति उपयोगी र कल्याणकारी कार्य गर्नुभएको हुँदा परमपूज्य सदगुरुदेव समाजशिरोमणि र जगत्‌गुरुको उपाधिले पनि विभूषित हुनुहुन्छ । सिद्धाश्रम शक्ति केन्द्र यिनै महान् गुरुहरूलाई धारण गरेर अध्यात्म र समाजको लागि अपरिहार्य कार्यलाई सजिलै समाजमा लैजाने पावन लक्ष्यका साथ अगाडि बढिरहेको छ । आध्यात्मिक विधाहरूलाई लागु गर्नाले समाजलाई कुलत अनि कुसंस्कारबाट बचाउन सकिन्छ ।

विना गुरु जीवनको कुनै अर्थ हुँदैन । समुन्द्रको बीचमा अलपत्र परेको ढुङ्गा जसरी कुशल नाउँको हातमा पर्न गयो भने किनारा लाग्न सक्छ, त्यसरी नै मानवजीवन पाएर पनि असल मार्ग भेट्न नसकेर विना लक्ष्य, विना मार्ग भौंतारिरहेका मानिसलाई सद्‌गुरुको आवश्यकता पर्दछ । हाम्रो भड्किरहेको आत्मालाई परमात्मासँग मेल गराउन नसकेसम्म खहरे खोला समुन्द्र भेट्न दौडे झैं हाम्रो आत्मा पनि विना लक्ष्य दौडिरहन्छ । जब हामी सदगुरुसँग आत्माको मेल गराउन सफल हुन्छौं तब मात्र हामीमा आनन्द प्राप्त हुन्छ । आत्मानन्द त कतै कसैले आजसम्म भौतिक शरीर, धन-सम्पत्ति र सुख-दुःखबाट अनुभव गर्न सकेको छैन । खहरे खोला समुन्द्रमा विलय भएपछि जसरी शान्त हुन्छ, त्यसरी नै हाम्रो आत्मा पनि सद्‌गुरुदेवहरूको मिलनबाट तृप्त र आनन्दित हुन्छ ।

परब्रह्म परमेश्वरलाई ज्ञानेन्द्रियबाट जान्न र कर्मेन्द्रियबाट छुन सकिँदैन । विशाल हात्ती र सूक्ष्म भुसुनामा पनि परब्रह्म उस्तै हुनुहुन्छ । निराकार परब्रह्म आफ्ना भक्तले प्रेमपूर्वक पुकारेमा दर्शन दिनको लागि साकार पनि बन्न सक्नुहुन्छ । पानीमाथि उम्रेको जलकुम्भी झारलाई पन्छाएर हेरमा भित्र पानी हुन्छ, त्यस्तै लोभ, मोह, अहंकार विषय वासनाजस्ता भावनाहरू पनि आत्माका जलकुम्भी झार हुन् जसले प्रकाशमान आत्मालाई ढाकेर जीवात्माले नदेख्ने बनाइदिएको हुन्छ । धूलो भरिएको ऐना पुछे मात्र आफ्नो अनुहार प्रष्ट देख्न सकिन्छ । त्यसैले अन्त:करणलाई स्वच्छ राख्न सके ज्ञान प्राप्त गर्न र आत्मदर्शन पाउन सकिन्छ ।

आफ्नो आत्मोत्थानको लागि र आफूभित्र रहेका विकारहरू हटाउनको लागि साधना सरल र सजिलो माध्यम हो । सिद्धाश्रम शक्ति केन्द्र खुदीले किरातेश्वर मन्दिर नजिकै बनाएको नवनिर्मित आश्रम भवन उद्‌घाटनको पुनीत अवसर पारेर धेरैभन्दा धेरै साधकसाधिका एवं भक्तजनहरूलाई परम कृपालु भगवान् शम्भु सदाशिवको साधना लिने र कृपा, आशीर्वाद प्राप्त गर्ने सजिलो माध्यम तयार भएको छ ।

भगवान् शिवलाई देवताहरूमा महादेव, आदिदेव, योगीराज काललाई पनि वशमा पार्न सक्ने भएकोले मृत्युञ्जय पनि भनिन्छ । हाम्रा आराध्यदेव शिवजीको साधना लिई शिवसँग आत्माको मिलन गराउने भावलाई बारम्बार प्रयत्न गरिरहयो भने अवश्य पनि एक दिन सफल हुन सकिन्छ । जसरी फूलमा गन्ध, बिउमा बिरुवा, काठमा अग्नि, उखुभित्र सख्खर नदेखिने गरी छिपेर बसेको हुन्छ, त्यसलाई बाहिरी आँखाले देख्न सकिँदैन तर उपयुक्त प्रयत्नबाट यस्ता बहुमूल्य चिजहरूलाई निकाल्न सकिन्छ । त्यसरी नै हामीभित्र आत्मा छ, आत्माभित्र साक्षात् शिव हुनुहुन्छ, उहाँको साक्षात्कारका लागि भगवान् शिवप्रति भक्ति, श्रद्धा, समर्पण भाव राखी बारम्बार शिव तत्त्वलाई आफूभित्र खोज्नु पर्दछ । यसका लागि परमपूज्य सद्‌गुरुदेवहरूको मार्ग-निर्देशनमा शिव साधना गर्नु आवश्यक हुन्छ । हामीलाई ज्ञान, चेतना दिने, गलत मार्गबाट बचाउन र भगवान् शिवलाई हामीभित्र साक्षात्कार गराइदिन सक्ने क्षमता केवल गुरुहरूसँग मात्र हुन्छ । गुरुदेव भन्नुहुन्छ– गुरु र शिष्यमा हावा छिर्ने दुरी पनि बाँकी रहनु हुँदैन । भगवान् श्रीराम पनि गृहस्थमा आउनु भयो, भगवान् श्रीकृष्ण पनि गृहस्थमा आउनु भएको हो । तर गृहस्थजीवनले उहाँहरूको विशाल योजनामा कुनै असर परेन, उहाँहरूको नाम कुनै शिलालेखमा कुँदनु पर्ने आवश्यकता छैन । सबैको मन-मन्दिरमा उहाँहरू अमर हुनुहुन्छ । संसारमा जन्मेर थोरै मानिसहरू मात्र नरबाट नारायण बन्न सफल भएका छन् । यसको लागि पूर्ण तपस्या र साधनाको आवश्यकता पर्दछ ।

श्रावण महिना शिवको ध्यान, साधना, जप, तप, पूजा, पाठ गर्ने उत्तम महिना हो । परमपूज्य सद्‌गुरुदेवहरूको कृपा एवं आशीर्वादस्वरूप यो श्रेष्ठ महिनामा शिवको साधना गर्ने सौभाग्य प्राप्त गर्नु अत्यन्तै उत्तम संगम हो । भगवान् शंकर समस्त सम्पत्तिहरूको उद्‌गम भएर पनि कमण्डलु लिएर हिँड्नुहुन्छ । सम्पूर्ण सम्पत्तिहरू उहाँबाटै प्रकट हुन्छन्, तीनै लोकको मालिक भएर पनि उहाँ श्मसानबासी हुनुहुन्छ । भयानकरूपमा रहनु भएता पनि उहाँलाई शिव भनिन्छ । त्यसैले शिव तत्त्वको महिमा जान्न, चिन्नका लागि केवल शिवजीकै कृपाबाट मात्र सम्भव छ । यस्ता सामर्थ्यवान् भगवान् शिवजीलाई सजिलै खुशी बनाउन सकिने सरल माध्यम साधना हो । श्रावण महिनाको पावन अवसरमा आफ्ना भक्तहरूलाई असीम कृपा एवं आशीर्वाद वर्षाउन उनीहरूको सामुन्ने, बाधा अड्‌चनको रूपमा रहेका समस्त रोग, पीडा र बाधाहरू चाँडोभन्दा चाँडो समाप्त गर्न र आफ्ना शिष्यहरूमा साधनात्मक क्षमता, चैतन्यता र अध्यात्मिक ऊर्जा वृद्धि गराउन भगवान् शिव अति कृपालु हुनुहुन्छ । त्यसैले समयलाई चिनौं, आफ्ना आराध्यदेव भगवान् शम्भु सदाशिवको श्रीचरणकमलमा विसर्जित हुँदै साधना गरौं, साधक बनौं ।

श्री श्री महायोगी गुरु गोरखनाथ एवं किरातेश्वर शिवजीको कृपा, आशीर्वाद प्राप्त गरी खुदीका साधकसाधिका एवं भक्तजनहरूको आफ्नै अथक प्रयास, परिश्रम र भावभक्तिस्वरूप किरातेश्वर शिवजीको काखमा निर्माण भएको सिद्धाश्रम शक्ति केन्द्र आश्रम भवनले समाजको लागि अविस्मरणीय गुण लगाउने छ । व्यक्तिगत कामलाई कुनै प्रवाह नराखी परमपूज्य सद्‌गुरुदेवहरूको योजनामा दिन रात खट्नुहुने साधकसाधिका एवं भक्तजनहरू परमपूज्य सद्‌गुरुदेवहरूको आफ्नै खातामा सदा अमर रहने छन् । उहाँहरूको नाम कहिल्यै मेटिने छैन । यही नै हामी सबैले जम्मा गरेको अक्षय कोष हुनेछ । आफ्ना लागि बनेका घरहरू भत्केर जानेछन्, टाँसिएका नामहरू मेटिएर जानेछन् । तर समाज कल्याणको लागि बनेको यो भवन सदा सुरक्षित रहनेछ । यस्तो अद्वितीय भवन निर्माण गर्नको लागि आ-आफ्नो क्षेत्रबाट जो जसले सक्दो सहयोग गर्नुभयो, उहाँहरू सबै परमपूज्य सद्‌गुरुदेवहरूको कृपा पात्र एवं सच्चा भक्त हुनुहुन्छ । यहाँका बासिन्दाहरू सबैको घर-घरमा सद्‌गुरुदेवहरूको उज्यालो किरण पुगोस् । श्री शिवगोरक्षले रक्षा गरिएको यो पवित्र भूमि सदा सर्वदा गुरुहरूको साधना गर्ने स्थलको रूपमा प्रज्ज्वलित भइरहोस् । सिद्धाश्रम शक्ति केन्द्रले यहाँहरूको उज्ज्वल भविष्यको सदा सदा कामना गरिरहने छ । अन्तमा सद्‌गुरुदेव हजुरहरूको कृपाले बनेको यो भवन हजुरहरूकै चरण कमलमा समर्पित गर्दछौं ।

भवन निर्माण गर्ने क्रममा, केही कुराहरू लेख्ने क्रममा, हजुरहरूको चरणकमलमा विसर्जित भई गुरुकार्य गर्ने क्रममा हामी अज्ञान, अनाथ शिष्यहरूबाट हुन गएका सम्पूर्ण गल्ती, कमी-कमजोरी र न्यूनताहरूप्रति परमपूज्य सद्‌गुरुदेव, शम्भु सदाशिव र सम्पूर्ण भक्तजनहरूसँग क्षमा याचना गर्दछौं । धन्यवाद ! जय गुरुदेव !

*सिद्धाश्रम शक्ति केन्द्र*
*सम्पर्क कार्यालय रामघाट, पोखरा-१०*



# तान्त्रोक्त शिव साधना

श्रावण महिनालाई भगवान् शिवको अनुकम्पा, कृपा एवं आशीर्वाद प्राप्त गर्ने एक दिव्य महिनाको रुपमा लिने गरिन्छ । यस महिनामा भगवान् शिवलाई सहजै खुशी बनाउन सकिन्छ । यसैले श्रावण महिनामा, अझ सोमबारका दिन प्रायः सबै शिव मन्दिरहरुमा भीड लाग्ने गर्छ । सिद्धाश्रम शक्ति केन्द्रद्वारा तान्त्रोक्त विधि-विधानअनुसार सम्पन्न हुने यो दिव्य साधना प्रत्येक व्यक्तिलाई लाभदायक हुने कुरामा कुनै शंका छैन । भगवान् शिवको आशीर्वाद प्राप्त गर्नको लागि शास्त्रहरुमा पनि श्रावण महिनालाई 'शिव सिद्धि महिना' भनी व्याख्या गरिएको छ, उहाँको प्रिय महिना भनी वर्णन गरिएको छ ।

भगवान् शिवलाई खुशी बनाई आशीर्वाद प्राप्त गर्ने सबैभन्दा सहज, सरल एवं सशक्त माध्यम नै साधना हो । गुरुबिना भगवान्‌हरुको कृपा, आशीर्वाद प्राप्ति सम्भव छैन । यसैले सद्‌गुरुहरुसँग पनि जोडिने, भगवान् शिवको पनि कृपा प्राप्त हुने यस अद्वितीय शिविरमा यहाँहरुले पनि सम्मिलित भई आशीर्वाद प्राप्त गर्नुहोस् । भगवान् शिवको दिव्य मंत्र प्राप्त हुने यो साधना शिविर स्वयं भगवान् शिवको सूक्ष्म सान्निध्यतामा सम्पन्न हुन लागिरहेको छ । सिद्धाश्रम शक्ति केन्द्र शिवरुपी सद्‌गुरुदेवहरुको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा अगाडि बढिरहेको छ । परमपूज्य सद्‌गुरुदेवद्वय नै शिव र साधना पनि शिवकै सम्पन्न हुनु पनि आफैंमा गुरुकृपा एवं शिवकृपाको लागि विशिष्ट योग बनेको छ ।

भगवान् शिवको साधना व्यक्तिलाई किन आवश्यक छ ? यस साधनाले के प्राप्ति हुन्छ ? आदि प्रश्न कसै-कसैको मनमा उब्जिन सक्दछ । भगवान् शिवको यो साधना भगवान् शिवसँग लाइन जोड्ने एउटा माध्यम हो अर्थात् पानीको अभाव भएका व्यक्तिलाई समुन्द्रमा लगेर जोड्ने प्रक्रिया हो, पानी कति उघाउने उसको इच्छाको कुरा हो । त्यस्तै, भगवान् शिवसँग लाइन जोडिएपछि व्यक्तिले के-के प्राप्तिको इच्छा राख्छ, त्यो व्यक्तिको इच्छामा निर्भर गर्दछ । तीन लोक, चौध भुवनका अधिपति मानिने सम्पूर्ण सिद्धि, शक्ति, क्षमा, सामर्थ्य समेटिनुभएका भगवान् शिवले चाहेमा दिन नसक्ने त्यस्तो कुनै चिज छैन । व्यक्तिका इच्छित मनोकामनाहरु पूरा गराइदिने, जस्तोसुकै विघ्न-बाधाहरुबाट, ठूलाभन्दा ठूला समस्याहरुबाट पनि पार लगाइदिने, जस्तोसुकै रोग-व्याधि पनि हटाइदिने, आर्थिक दरिद्रता, विविध दुःख-कष्ट एवं समस्याहरुले गर्दा शवरुपी जीवनयापन गरिरहेका व्यक्तिहरुलाई भाग्योदय गराई शिवत्वमा पुऱ्याउन सक्ने भगवान् शिवको साधना सम्पूर्ण स्तरका व्यक्तिहरुका लागि उत्तिकै आवश्यक एवं अनिवार्य छ । यसरी भौतिकतासम्बन्धी सम्पूर्ण समस्याहरु पूरा गर्दै भौतिक पूर्णता एवं आध्यात्मिकरुपमा अगाडि बढ्न चाहने सम्पूर्ण व्यक्तिहरुलाई आध्यात्मिक पूर्णता प्रदान गरिदिने भगवान् शिवको यो साधना व्यक्तिलाई भोग र योग दुवै प्रदान गर्न सहायक हुन्छ । यसैले भगवान् शिवलाई इष्टदेवको रुपमा मान्नेहरु, कुलदेवको रुपमा मान्नेहरु, अन्य देवीदेवताहरुभन्दा प्रिय देवको रुपमा मान्नेहरु एवं भगवान् शिवका सम्पूर्ण भक्त, साधक, श्रद्धालुहरुका लागि एवं सम्पूर्ण व्यक्तिहरुका लागि यो साधना एक स्वर्णिम अवसर बनेर हाम्रो सामु आइपुगेको छ । यसैले, यस साधनामा भाग लिई आफ्नो भाग्य चम्काउन चाहनेहरुका लागि, भगवान् शिवको कृपा प्राप्त गर्न चाहने सम्पूर्ण व्यक्तिहरुका लागि समयमै सम्पर्क राख्नुहुन हार्दिक अनुरोध गर्दछौं ।

# श्री शिवगोरक्षनाथ मन्दिर

**–दिनानाथ ढकाल, अध्यक्ष**

कास्की जिल्ला लेखनाथ-११ अन्तर्गत पचभैया गाउँको दक्षिण दिशाको क्युँवेसी फाँटको काखमा अवस्थित श्री शिवगोरक्ष पीठ यस जिल्लाकै एक मात्र धार्मिक स्थल हो । सिद्ध देवनाथ योगी, सिद्ध भोलानाथ योगी, सिद्ध नरहरिनाथ योगी, नरनाथ योगी तथा स्थानीय भद्र भलाद्मी एवं सर्वसाधारणको संयुक्त प्रयासबाट वि.सं. २००९ सालमा यस सिद्धाश्रम (मन्दिर) को स्थापना भएको हो । यस मन्दिरको स्थापनामा एउटा रोचक प्रसंग जोडिएको छ । वेगनास र रूपातालको बीच भागमा रहेको पचभैया गाउँको घना जंगलमा अवधूत देवनाथ नाम भएका एकजना साधु बस्ने गर्नुहुन्थ्यो । उहाँको शरीरमा मात्र लगौँटी र साथमा चिम्टा, कमण्डलु र भक्तजनहरूले दिएका भोजन थाप्ने एक मात्र सामग्रीहरू हुन्थे रे उहाँसँग । बसेका स्थानमा श्रद्धाका साथ भक्तजनले उहाँका लागि कुटी निर्माण गरिदिन्थे रे । उहाँ एक स्थानमा बढीमा १० दिन मात्र बस्ने, त्यसपछि अर्को स्थानमा सर्ने गर्नुहुन्थ्यो र त्यस ठाउँमा पनि भक्तजनले उहाँका लागि कुटी निर्माण गरिदिन्थे रे । हप्ता, दश दिन मात्र एक स्थानमा बस्ने र त्यसपछि तुरुन्तै अर्को स्थान सर्ने क्रममा अहिलेको श्री गोरक्षनाथ सिद्धाश्रम रहेको स्थानमा पनि आएर तपस्या गर्नुभएको रहेछ उहाँले । उहाँ त्यस ठाउँमा तपस्या गर्दै गर्दा राति सपनामा उहाँलाई श्री श्री महायोगी गुरु गोरखनाथले दर्शन दिएर 'यस ठाउँमा तिमीले (सिद्धाश्रम) शिव गोरक्षनाथ मन्दिर स्थापना गर्ने कार्य गर' भन्ने आदेश भएपछि उहाँले पचभैया र खुदीको त्यस बेलाका भक्तजनहरूलाई बोलाएर गुरु गोरक्षनाथले सपनामा आदेश गर्नुभएको कुरा राख्नुभयो । गुरुले राख्नुभएका विषयमा सबैको पूर्ण समर्थन भएपछि मन्दिर स्थापना हुने वातावरण बन्यो र सिद्ध नरहरिनाथ योगी एवं सिद्ध भोलानाथ योगीको पूर्ण राय सल्लाहअनुसार मन्दिर (सिद्धाश्रम) स्थापना हुन पुग्यो भन्ने कुरा त्यसबेलाका हर्ताकर्ता र अहिले ८० वसन्त पार गरिसक्नु भएका ज्येष्ठ नागरिकहरू बताउँछन् ।

सिद्ध नरहरिनाथ योगी र सिद्ध भोलानाथ योगीज्यूको आदेशअनुसार मन्दिरको पूजापाठ, रेखदेख र संरक्षणका लागि खुदी निवासी गुरु नरनाथ योगीलाई जिम्मा दिइयो र उहाँले २०३५ सालसम्म जिम्मेवारी पूरा गनुभयो । उहाँको ब्रह्मलीनपछि उहाँका ज्येष्ठ सुपुत्र भीष्मनाथ योगीज्यूको काँधमा जिम्मेवारी आयो । उहाँले केही वर्ष मात्र जिम्मा लिनु भएछ । त्यसपछि गुरु नरनाथ योगीका शिष्य खुदी निवासी अम्मरनाथ योगीज्यूले मन्दिर संचालनको जिम्मा लिनुभएको थियो । उहाँले लामो समय आफ्नो जिम्मेवारी वहन गर्नुभयो । २०६७ सालदेखि सिद्ध नरहरिनाथ योगीज्यूका परमप्रिय शिष्य श्री बलभद्रनाथ योगीज्यूले उक्त मन्दिरको संरक्षकको जिम्मेवारी वहन गरिरहनु भएको छ ।

सिद्धाश्रम (मन्दिर) संचालन निरन्तररूपमा राम्रोसँग चल्दै जाओस् भन्ने अभिप्रायले केही भक्तजनहरूले सिद्धाश्रम स्थापनाकालमा नै जग्गा दान भनुभएको रहेछ । सिद्धाश्रमका जग्गा दाताहरूमा स्व. पित्रराज त्रिपाठी, स्व. मेघनाथ अधिकारी, स्व. कुलदिप कोइराला, स्व. लीलानाथ अधिकारी, स्व. टेकनाथ अधिकारी, स्व. होमनाथ अधिकारी, स्व. विश्वनाथ अधिकारी, स्व. कमला माया अधिकारी (भक्तिनी), स्व. अम्मरनाथ योगी, धर्मदत्त अधिकारी, दुर्गा देवी अधिकारी, बसुन्धरा अधिकारी हुनुहुन्छ । उहाँहरू सबैले दान गर्नुभएको जम्मा पाखो र खेत गरी करिव १ सय रोपनी जग्गा सिद्धाश्रमको नाउँमा लालपूर्जा बनेको छ । सिद्धाश्रम परिसर झण्डै ९० रोपनीको रहेको छ । केही भाग आवादी छ भने केही जंगल छ । यसदेखि बाहेक भक्तजनहरूले दिएको दान दातव्यबाट नै अहिलेसम्म राम्रोसँग मन्दिर संचालन भएको छ ।

वि.सं. २०४१ सालमा राष्ट्रिय योगी नरहरिनाथको वरद नेतृत्वमा यस सिद्धाश्रममा कोटिहोमको आयोजना भव्यरूपमा भएको थियो । कोटिहोमबाट यसको प्रसिद्धि निकै टाढासम्म पुग्नुको साथै केही आर्थिक संकलन पनि भएको थियो । त्यही यज्ञ शेषबाट गोरक्षनाथ मन्दिरको आडमा सत्तल (धर्मशाला) निर्माण भयो र केही सुधारका कामहरू भए । कोटिहोमको समयमा बनाइएका २ वटा ठूला हवनकुण्डमा एउटा जस्ताको तस्तै संरक्षण गरेर राखिएको छ भने अर्कोमा कोटिहोमको अग्नि निभ्न नदिई अखण्ड धुनीको रूपमा कायम गरिएको छ । श्रद्धालु भक्तजनहरू अखण्ड धुनीको विभूति श्रद्धाका साथ घरमा लगेर राख्ने र घरको समेत रक्षा हुन्छ भन्ने पूर्ण धार्मिक विश्वास रहेको छ । वि.सं. २०४५ सालमा पहिलो र २०६८ सालमा दोस्रो लक्ष्यहोम सम्पन्न भएका छन् । महाशिवरात्रि पर्वमा हरेक वर्ष यहाँ मेला लाग्दछ । टाढा टाढाबाट दूध चढाउन भक्तजनहरू आउने गर्दछन् । विगत ३ वर्षदेखि वैशाखी पूर्णिमामा गोरक्ष जयन्ती बडो धुमधामका साथ सम्पन्न भएको थियो । गोरक्ष जयन्तीका दिन रोट अर्पण गर्ने विशेष कार्यक्रम रहेको हुन्छ । यस कार्यमा साधकसाधिकाहरू, नाथ गुरुहरू र अन्य भक्तजनहरू सबै जुट्ने गर्दछन् । मन्दिरमा विवाह व्रतबन्धका कार्यहरू पनि हुने गर्दछन् ।

सिद्धाश्रम संचालन तथा संरक्षणमा नाथ गुरुहरूलाई सघाउन समिति गठन गर्ने प्रक्रिया त शुरुका दिनदेखि नै थियो । तर समितिले आधिकारीकता भने ०५३ सालमा आएर मात्र प्राप्त गर्‍यो । जिल्ला प्रशासन कार्यालय कास्कीमा 'दैव धर्म सेवा समिति' दर्ता भयो र त्यसले ०६६ सालसम्म काम गर्‍यो । २०६७ सालमा गुरु बलभद्रनाथ योगीको आगमन भयो । उहाँ र सबै भक्तजनहरूको राय सल्लाह बमोजिम 'दैव धर्म सेवा समिति'को विधान हटाई श्री शिव गोरक्षनाथ पीठ सिद्धाश्रमको नयाँ विधान तर्जुमा गरी अलि उदार एवं फराकिलो ढंगले अगाडि बढ्ने निर्णय भयो । जसअनुसार श्री शिवगोरक्ष पीठ सिद्धाश्रम लेखनाथ-११ पचभैया कास्कीको लागि विधान २०६८ साल श्रावण ५ गते जिल्ला प्रशासन कार्यालयमा कास्कीमा दर्ता भयो । त्यही विधानको मातहतमा रहेर सिद्धाश्रममा केही सुधारका कामहरू भएका छन् । सिद्धाश्रम परिवारमा रहेको जंगललाई गोडमेल गरी केही नगद आर्जन गर्ने काम भयो । लप्सी र नासपाती गरी करिव २०० बोटविरुवा रोप्ने काम भएको छ । श्री गोरक्षनाथको पश्चिमपट्टिको डंडेरी काटी डोजर लगाई कार्यक्रम गर्ने मैदान स्थल निर्माण गरिएको छ । मन्दिर परिवारको जग्गा संरक्षणका लागि छेकेवारको काम शुरु भई करिव १ सय वटा पक्की सिमेण्ट पोलहरू भर्खरै गाड्ने काम सम्पन्न भएको छ, पानीको स्थायी व्यवस्था गरिएको छ । तल फेदिबाट मन्दिर छेउसम्म गाडी आउन सक्ने मोटर बाटो निर्माण गरिएको छ । एकदम विकट अवस्थामा रहेको यस सिद्धाश्रम परिसर हाल आएर ५ वटा कच्ची मोटर बाटाहरूले जोडिएको छ जसले गर्दा टाढा टाढा तथा नजिकबाट आउने भक्तजनहरूलाई ठूलो राहत भएको छ । त्यस्तै गरेर विधानमा व्यवस्था भए अनुसार झण्डै २६० जना यस सिद्धाश्रमका आजीवन सदस्य बनिसकेका छन् । आजीवन सदस्य वृद्धि गर्ने कार्य जारी नै छ । घटीमा पनि ५०८ जना आजीवन सदस्य पुर्‍याउने लक्ष्य रहेको छ ।

लेखनाथ न.पा. को सहयोगमा गुरु योजना (Masterplan) तयार गरी अगाडि बढ्ने लक्ष्य राखिएको छ । लेखनाथ न.पा. को एक धार्मिक पर्यटन स्थलको रूपमा विकास गर्ने उद्देश्यका साथ समिति अगाडि बढिरहेको छ जसअनुसार विभिन्न देवीदेवताका मन्दिरहरू निर्माण, गुरुकुल, पुस्तकालय स्थापना, सत्संग भवन निर्माण, सभाहल, साधुसन्तका लागि धर्मशाला, शौचालय, भान्छा घर, अतिथिगृह आदि समावेश गरिनेछ । संस्कृत, ज्योतिष, आयुर्वेद, योग आदि हाम्रा पूर्वीय दर्शनका सबै विद्याहरूको केन्द्र बनाउने लक्ष्य र उद्देश्यका साथ वर्तमान समिति अगाडि बढिरहेको छ । यसमा सम्बद्ध सबै पक्षहरूको साथ सहयोग रहेमा यो परिकल्पनाले मूर्तरूप धारण गर्नेछ । जय गुरुदेव !

*श्री शिवगोरक्ष पीठ सिद्धाश्रम, लेखनाथ-११, पचभैया, कास्की ।*

गुरुकृपा वर्षिरहोस्, खुदी आश्रम फलोस् फुलोस्
सद्गुरुको आशीर्वाद सधैं भइरहोस् ।
परमपूज्य सद्गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ एवं
परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको
कृपा, अनुकम्पास्वरूप कास्की, लेखनाथ-१२ खुदीमा
गुरु आश्रम भवन निर्माण गर्न सफल भएकोमा यस पुनीत कार्यमा सहयोग गर्ने
सम्पूर्णलाई हार्दिक धन्यवाद दिँदै आश्रमको उत्तरोत्तर प्रगतिको कामना गर्दछौँ ।

## कुलबहादुर कार्की/मेनुका इन्टरप्राइजेज

थापाथली, बागमती पुल पो.ब.नं. २३२५४
फोन : ४२६०६७४ फ्याक्स ४२६८२९४ मो. ९८५१०३६९१७, इमेल : menaka@ntc.net.np

गुरू कृपा वर्षिरहोस्, खुदी आश्रम फलोस् फुलोस्
सद्गुरूको आशीर्वाद सधैं भइरहोस् ।
परमपूज्य सद्गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ एवं
परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको
कृपा, अनुकम्पास्वरूप कास्की, लेखनाथ-१२ खुदीमा
गुरु आश्रम भवन निर्माण गर्न सफल भएकोमा यस पुनीत कार्यमा सहयोग गर्ने
सम्पूर्णलाई हार्दिक धन्यवाद दिँदै आश्रमको उत्तरोत्तर प्रगतिको कामना गर्दछौँ ।

## मेघराज घिमिरे, कमला घिमिरे तथा परिवार

गुरू कृपा वर्षिरहोस्, खुदी आश्रम फलोस् फुलोस्
सद्गुरूको आशीर्वाद सधैं भइरहोस् ।
परमपूज्य सद्गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ एवं
परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको
कृपा, अनुकम्पास्वरूप कास्की, लेखनाथ-१२ खुदीमा
गुरु आश्रम भवन निर्माण गर्न सफल भएकोमा यस पुनीत कार्यमा सहयोग गर्ने
सम्पूर्णलाई हार्दिक धन्यवाद दिँदै आश्रमको उत्तरोत्तर प्रगतिको कामना गर्दछौँ ।

## वृहस्पति सापकोटा, विष्णु सापकोटा तथा परिवार

गुरू कृपा वर्षिरहोस्, खुदी आश्रम फलोस् फुलोस्
सद्गुरूको आशीर्वाद सधैं भइरहोस् ।
परमपूज्य सद्गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ एवं
परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको
कृपा, अनुकम्पास्वरूप कास्की, लेखनाथ-१२ खुदीमा
गुरु आश्रम भवन निर्माण गर्न सफल भएकोमा यस पुनीत कार्यमा सहयोग गर्ने
सम्पूर्णलाई हार्दिक धन्यवाद दिँदै आश्रमको उत्तरोत्तर प्रगतिको कामना गर्दछौँ ।

## मनोज शर्मा, गुन्जन शर्मा तथा शर्मा परिवार, मुस्ताङचोक पोखरा

गुरुकृपा वर्षिरहोस्
खुदी आश्रम फलोस् फुलोस्
सद्गुरुको आशीर्वाद
सधैं भइरहोस् ।

परमपूज्य सद्गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको कृपा, अनुकम्पास्वरूप कास्की, लेखनाथ-१२ खुदीमा गुरु आश्रम भवन निर्माण गर्न सफल भएकोमा यस आश्रमको उत्तरोत्तर प्रगतिको कामना गर्दै गुरु कृपाले यस पुनीत कार्यमा सहयोग गर्ने सम्पूर्णलाई गुरु कृपा आशीर्वाद प्राप्त होस् भन्ने हार्दिक प्रार्थना गर्दछौँ ।

## सिद्धाश्रम शक्ति केन्द्र,सम्पर्क कार्यालय पोखरा

रामघाट, कास्की । फोन : ०६१-५३०७८६

## सिद्धाश्रम शक्ति केन्द्र, सम्पर्क कार्यालय लेखनाथ

लेखनाथ, कास्की । फोन : ०६१-५६९१९०

## सिद्धाश्रम शक्ति केन्द्र, सम्पर्क कार्यालय

बिन्ध्यवासिनी, कास्की

## सिद्धाश्रम शक्ति केन्द्र, आरती केन्द्र

भगवतीटार, कास्की

## सिद्धाश्रम शक्ति केन्द्र, आरती केन्द्र

मालेपाटन, कास्की

## सिद्धाश्रम शक्ति केन्द्र, आरती केन्द्र

घार्मी, कास्की

## सिद्धाश्रम शक्ति केन्द्र, प्रचारप्रसार केन्द्र

लामाचौर, कास्की

दुइटा संस्मरण

# अन्तमा पूरा भएरै छोड्यो आश्रम भवन

डिपिसीपछि पर्खाल उठाउने क्रममा खुदी आश्रम

सिद्धाश्रम शक्ति केन्द्र नेपालमा आबद्ध भएदेखि नै मेरो जीवनमा आमुल परिवर्तन भएको मैले प्रत्यक्ष अनुभव गरेकी छु। शायद गुरुदेवसँगको मेरो नाता जन्मौं-जन्म पहिलेको भएर होला । सिद्धाश्रम शक्ति केन्द्र स्थापित हुनुभन्दा पहिले अन्य कैयौं धार्मिक संघसंस्थाहरू पनि थिए, अन्य संघसंस्थाहरू शुरु भइसकेका थिए । तर मेरो मन कतै पनि तानिएको थिएन । सिद्धाश्रम शक्ति केन्द्रको स्थापना भएपछि पोखराको रामघाटमा पनि यस संस्थाको सम्पर्क कार्यालय स्थापना भयो । यसपछि बिस्तारै सद्गुरुदेवहरूलाई चिन्ने सौभाग्य प्राप्त हुँदै गयो। लेखनाथमा पनि सिद्धाश्रम शक्ति केन्द्रको सम्पर्क कार्यालय स्थापना भएपछि म हप्ताको एक दिन त्यहाँ गुरुकार्य गर्न जान्थें । त्यसपछि खुदीमा पनि प्रचारप्रसार कक्ष खोल्न पाए नजिक हुने थियो, अन्य थुप्रै दिदीबहिनी, दाजुभाइहरूलाई पनि गुरुसँग जोड्न पाइने थियो भन्ने लाग्यो। लेखनाथका दाइदिदीहरू, पोखरा आश्रमका दाइदिदीहरूले पनि खुदीमा पनि आश्रम खुले हुन्थ्यो भन्ने जस्ता कुराहरू भन्ने गर्नुहुन्थ्यो, यस्तो सल्लाह पाइन्थ्यो ।

वि.सं. २०६७ साल आश्विन ३ गते वैठक बसी आश्विन ४ गते सोमबारदेखि खुदीमा आरती शुरु भयो । पहिले थोरै कार्यकर्ताहरूबाट भाडामा कोठा लिएर गाह्रो साह्रो गरी आरती शुरु गरियो । पछि आफ्नै आश्रम भवन बनाउन पाए कति आनन्द आउँथ्यो जस्तो लाग्यो । यसका लागि पहल भयो ।

आर्थिक संकलनको क्रममा अग्ला, ठूला घरहरूतर्फ यस घरबाट त राम्रै रकम आउला भनी गयौं । तर केही बेला त त्यस्ता ठूला घरहरूबाट शून्य नै हात लाग्दथ्यो । कतिपय ठाउँमा साना साना टिनका छाप्राहरू, खरका झुपडीहरूमा यस्तो ठाउँमा के होलान् र के देलान् भनी अन्यत्र हिँड्न खोज्यो, विचरा कति दुःखी हुन्थे र बोलाउँथे । हामीलाई पनि थोरैले भए पनि पुण्य जम्मा गर्न दिनुहोस् भनी बोलाई बोलाई दिन्थे । यसरी हामीले के बुझ्यौं भने धन भएर, ठूला भएर मात्र हुँदो रहेनछ, मन धनी, मन ठूलो कुनै समय, कुनै जुनीमा गुरुहरूको नजिक भएकै हुनु पर्दोरहेछ। तब मात्र गुरुसँग जोडिन तयार, गुरुहरूद्वारा तयार पारिएको दानपात्रमा दान गर्ने विचार आउँदो रहेछ । यसरी विभिन्न संस्मरण बटुल्दै हाम्रो आश्रममा, धेरै जस्तो साधिकाहरूकै संख्या बढी भएको कारण, घरको व्यवस्थापन, बच्चाबच्चीको चित्त बुझाउनु, चुलो चौकाको पनि जिम्मेवारी लिएर सबै समस्याहरूसँग जुधेर सम्पूर्ण साधकसाधिकाहरू खुट्टा दुख्ने गरी घरदैलो कार्यक्रममा खट्नुभयो र आर्थिक सहयोग जुटाइदिने, दान दिने दलहरूले पनि दान दिनुभयो र आश्रम भवन निर्माण गर्ने जुन अभिलाषा करिब पूरा भयो आज । आज पूज्य गुरुदेवहरूको आरती आफ्नै भवनमा गर्न पाएका छौं ।

यसका लागि सम्पूर्ण साधकसाधिकाहरू, दान दिनुहुने सम्पूर्ण दाताहरूलाई सद्गुरुदेवहरूको सदा सर्वदा कृपा, आशीर्वाद मिलोस् भन्दै सबैमा 'जय गुरुदेव !' को न्यानो अभिवादन अर्पण गर्दै आफ्नो छोटो अनुभव-अनुभूति राख्ने जुन सौभाग्य परमपूज्य सद्गुरुदेवहरूले दिनुभयो, यसका लागि जन्मौंजन्मसम्म आभार व्यक्त गर्दछु । जय गुरुदेव !

**—नमा खाँण,** *कोषाध्यक्ष*

*सिद्धाश्रम शक्ति केन्द्र, प्रचारप्रसार कक्ष, खुदी, लेखनाथ-१२, कास्की ।*

तयार भएपछि खुदी आश्रममा भेला हुनुभएका कार्यकर्ताहरू प्रसन्न मुद्रामा

गुरु कृपा वर्षिरहोस्, खुदी आश्रम फलोस् फुलोस्
सद्गुरुको आशीर्वाद सधैं भइरहोस् ।

**परमपूज्य सद्गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको कृपा, अनुकम्पास्वरूप कास्की, लेखनाथ-१२ खुदीमा गुरु आश्रम भवन निर्माण गर्न सफल भएकोमा यस पुनीत कार्यमा सहयोग गर्ने सम्पूर्णलाई हार्दिक धन्यवाद दिँदै आश्रमको उत्तरोत्तर प्रगतिको कामना गर्दछौं ।**

**गौमती थापा, छोरा योगेन्द्रकुमार थापा, नातिनी सुरक्षा थापा, नाती सन्देश थापा तथा सम्पूर्ण थापा परिवार, पोखरा-६, जरेबर**

# आश्रम भवनमा खट्दाको आनन्द



खुदी आश्रमको द्वारमा साइनबोर्ड झुण्ड्याउन व्यस्त एक साधक

सर्वप्रथम त नेपालमा सिद्धाश्रम शक्ति केन्द्रको स्थापना गर्नुहुने दाइदिदीहरूलाई धन्यवाद व्यक्त गर्दछु । कुरा रहयो कास्कीमा सिद्धाश्रम शक्ति केन्द्रको शुरुवात गर्ने । गुरु दाइदिदीहरूलाई मुरी मुरी धन्यवाद व्यक्त गर्दछु जसले हामीहरूलाई गुरुहरूसँग जोडिने सौभाग्य प्रदान गर्नुभयो । त्यसपछि लेखनाथसम्म अझ नजिक पायक पर्ने ठाउँमा ल्याई अथक प्रयास र तपस्या गरी जुन सम्पर्क कार्यालय लेखनाथ बनाउनुभयो, उहाँहरू सबै मेरा आध्यात्मिक जीवनका प्रेरणाश्रोत र पात्रहरू हुनुहुन्छ, उहाँहरूलाई हृदयदेखि नै आभार व्यक्त गर्दछु ।

निमित्त व्यक्तिहरू भए पनि योजना गुरुहरूकै थियो होला । कतिपयलाई गुरु भनेको के हो ? गुरु भनेका कस्ता गुरु हुन् ? गुरु कहाँ छन् ? यो त हिन्दुधर्म अथवा वैदिक सनातन धर्मभन्दा बेग्लै धर्म पो हो कि भन्ने जस्ता प्रश्नहरू खडा गरी आर्थिक सहयोग नगर्ने जस्ता कुरा दर्शाउँथे, त्यस्तालाई हामीहरूले जे जस्तो जान्यौं, जसरी जान्यौं, जति सक्यौं गुरुहरूलाई चिनाएर, गुरुहरूको महिमा र महत्त्व बुझाएर आर्थिक सहयोग माग्दा कतिपयले दिनुभयो, कतिपयले आनाकानी गरी टार्नुभयो । तर हामीलाई सके जति गुरुहरूको महिमा बताएर उहाँहरूलाई चिनाउन पाउँदा बेग्लै आनन्द आउँथ्यो । हुन त गुरुहरूको महानता, व्यापकता र महिमा हामीजस्ता भर्खरै अध्यात्ममा वामे सर्न लागेकाहरूको बोलीमा, शब्दमा समेटन के सक्दथ्यो ? माता सरस्वती र हजार जीब्रा भएका शेषनागसमेत असमर्थ हुने विषय हो गुरु महिमा र चर्चा । तैपनि हाम्रो क्षमताले जे जति भ्याउँथ्यो, सक्दथ्यौं भन्यौं र बुझाऔं । जो जसलाई पुण्यको खातामा आफ्नो केही अंश कमाई जम्मा गर्नु थियो, जम्मा गर्नुभयो, जो जसलाई गुरुसँग जोडिनु थियो, जोडिनु भयो, यो हाम्रो वशको कुरा थिएन । सूक्ष्म सत्तामा रहनु हुने, कण कणमा व्याप्त हुनु हुने महान् गुरुहरूकै लीला थियो । हामी केवल माध्यम र पात्रहरू मात्रै त थियौं । सबै खटनपटन गुरुहरूकै थियो ।

परमपूज्य सद्गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको कृपा, आशीर्वादबाट हामीलाई प्राप्त गुरुकार्यअन्तर्गतको कास्की लेखनाथ-१२ खुदी सोता बगैंचामा परमपूज्य सद्गुरुदेवहरूको दिव्य आरती संचालन गर्ने आश्रमको आफ्नै गोरक्ष निखिल आश्रम भवन बनाउने सौभाग्य प्राप्त भयो तर बजेट भने शून्य नै थियो । त्यसको मूलस्रोत भनेको श्रद्धालु भक्तजनहरूले दिनुभएको आर्थिक सहयोग नै मुख्य भएको कारण हामीले अर्थ संकलनका लागि घरदैलो कार्यक्रम संचालन गर्‍यौं । शुरुको दिनमा घरदैलो कार्यक्रमअन्तर्गत रकम सहयोग गरेर लेखनाथ-१२ का पूर्व वडाध्यक्ष भू.पू. प्रधानाध्यापक, अग्रज समाजसेवी आदरणीय डिल्लीराम पौडेलले रु. ११,१११।- दिनु भएर हाम्रो प्रयासलाई श्रीगणेश गरिदिनुभयो । उहाँले तपाईंहरूको अभियान पूर्णरूपमा सफल होस् भनी भाव व्यक्त गरी शुभेच्छा प्रकट गर्नुभएको थियो । उहाँले खाता खोलिदिनु भएपछि हामीले त्यस दिन गुरुदेवहरूको आशीर्वादस्वरूप करिब ४,४५०।- रूपैयाँ संकलन गर्न सक्यौं । मलाई त्यतिबेला यसरी मागेर त्यस्तो गहिरो ठाउँमा भवन निर्माण गर्न सकिएला जस्तो लागेकै थिएन । हामीले आँटेर नै होला, जे जति गाह्रो, साह्रो, अप्ठ्यारो परे पनि उक्त भवन निर्माण कार्यक्रमको अन्तिम चरणमा आएका छौं । अब चाहिँ उक्त भवनको उद्घाटनको व्यग्रताका साथ प्रतीक्षा गरिरहेका छौं । श्रावण १४ गते उद्घाटन गर्ने शुभमुहूर्त सद्गुरुदेवहरूले नै जुराइदिनु भएको छ ।

हामी सम्पूर्ण लेखनाथ-१२ स्थित सिद्धाश्रम शक्ति केन्द्र आरती संचालन केन्द्र खुदीका साधकसाधिकाहरू, बुढाबूढी, केटाकेटी, बच्चाका आमाहरू बच्चालाई पिठ्यूँमा बोकेरै भए पनि गुरुकार्यमा खटियो घरदैलो कार्यक्रममा हिँडियो ।

जब लेखनाथ-१२ स्थित खुदीमा सिद्धाश्रम शक्ति केन्द्र (प्रचारप्रसार कक्ष) खोलियो त्यसपछि गुरुदेवहरूलाई नजिक ल्याई घरमा व्यक्तिगतरूपमा र आश्रममा सामुहिकरूपमा गुरु आरती, गुरु महिमा, भजनकीर्तन, सम्पूर्ण भावहरू व्यक्त गर्न पाउँदा मेरो मन यति हर्षित छ, म आफूलाई यति भाग्यमानी ठान्दछु, मेरो घरको आर्थिक, शैक्षिक, व्यावहारिक र वैदेशिक

खुदी आश्रमको शिलान्यासको क्षण

खुदी आश्रम शिलान्यासको क्रममा हवन हुँदै

(गुरु आरती हुँदै)

सम्पूर्ण चाँजोपाँजो यति राम्रो भएको छ, यो सम्पूर्ण वैभव परमपूज्य सद्गुरुदेवहरूको असीम कृपा र आशीर्वादका कारणले हो । हुन त बेला बेलामा गुरुदेवहरूले परीक्षा लिइरहनु हुन्छ, बेला बेलामा अप्ठ्याराहरू आइलाग्छन् तैपनि सम्पूर्ण बाधा, अप्ठ्याराहरू आफसेआफ अनुकूल बन्दै गएका छन् । दुई तीन वर्षको संघर्षपछि पूज्य गुरुदेवको अनुकम्पाले जग्गा प्राप्त भई पैसा बजेट नभए पनि 'तिमीहरू आँट म पुऱ्याउँछु' भने झैँ गोरक्ष निखिल आश्रम भवन

पनि निर्माण गरियो । यही आउँदो श्रावण १४ गते शिव साधना सहित उद्घाटन गर्ने सद्गुरुदेवहरूले शुभ-साइत जुराइ दिनुभएको छ । अहिलेसम्म हप्ताको दुई बार सोमबार र विहीबार आरती हुँदै आएको यस स्थानमा अब सातै दिन आरती गर्न पाऔँ भनी परमपूज्य सद्गुरुदेवहरूसँग प्रार्थना गर्दछौँ ।

हामीलाई प्रेरणा प्राप्त होस् भनी अब मेरो बाँकी रहेको, अब आउने दिनहरू, परमपूज्य गुरुदेवहरूको उपहारस्वरूप रहेको, बचेको यो शरीरलाई गुरुकार्यमा खटाइरहन पाऊँ, गुरुदेवहरूको असल शिष्य बनिरहने र गुरुकार्यमा खटिरहने सल्लाह र सुझाव दिँदै मेरा जीवनका यी मीठा अनुभूतिहरूलाई परमपूज्य सद्गुरुदेवहरूकै चरणकमलमा अर्पण गर्दै गल्ती, कमजोरी भएमा यहाँहरूसमक्ष र गुरुदेवहरूसमक्ष क्षमा माग्दै कलम बन्द गर्ने सूक्ष्म अनुमति माग्दछु । जय गुरुदेव !

–**लक्ष्मी पौडेल**, संयोजक, *सिद्धाश्रम शक्ति केन्द्र, लेखनाथ-१२, खुदी ।*

गुरुकृपा वर्षिरहोस्, खुदी आश्रम फलोस् फुलोस्
सद्गुरुको आशीर्वाद सधैँ भइरहोस् ।

**परमपूज्य सद्गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको कृपा, अनुकम्पास्वरूप कास्की, लेखनाथ-१२ खुदीमा गुरु आश्रम भवन निर्माण गर्न सफल भएकोमा यस पुनीत कार्यमा सहयोग गर्ने सम्पूर्णलाई हार्दिक धन्यवाद दिँदै आश्रमको उत्तरोत्तर प्रगतिको कामना गर्दछौँ ।**

**भीमलाल श्रेष्ठ, मनकुमारी श्रेष्ठ, छोराहरू देवेन्द्र श्रेष्ठ, सन्तोष श्रेष्ठ, दिपक श्रेष्ठ तथा श्रेष्ठ परिवार, नयाँबजार.**

# सिद्धाश्रम शक्ति केन्द्र खुदीलाई आर्थिक र जिन्सी सहयोग गर्ने दाताहरुको नामावली

परमपूज्य सदगुरुदेवहरु श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको कृपा एवं आशीर्वादले मिति २०६८ साल चैत्र २३ गते विहीबारका दिन सावरपन्थी सदस्य साधक रामजी अर्याल, सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय रामघाट पोखराका संयोजक मेघराज घिमिरे, शिव गोरक्षनाथ शक्तिपीठ सिद्धाश्रम लेखनाथ–११, पचभैयाका नाथयोगी बलभद्र नाथसमेत सम्पूर्णको उपस्थितिमा पूजन, हवनसहित सावरपन्थीज्यू रामजी अर्याल र योगी बलभद्र नाथज्यूबाट शुभ मुर्हुतमा शिलान्यास गरिएको यस गोरक्ष निखिल आश्रम भवनलाई पूर्णतासम्म पुऱ्याइदिनुहुने सम्पूर्ण आर्थिक सहयोग गर्नुहुने दाताहरुलाई हार्दिक आभार प्रकट गर्दछौँ । साथै चन्दादाताहरुको सम्पूर्ण नामावली यस पत्रिकामा समावेश गर्न असमर्थ भएकोले गुरुदेवहरुसँग र सम्पूर्ण दाताहरुसमक्ष क्षमा माग्दै रु. १,०००।– भन्दा माथि नगद तथा जिन्सी सहयोग गर्नेहरुको नामावली प्रकाशित गर्नेछौँ भनी अर्थ संकलनको समयमा गरेको वाचाअनुसार नै चन्दादाताहरुको नाम यस 'खुदी आश्रम भवन विशेष' मा समावेश गरिएको छ । हरेक कोशिश र सावधानी अपनाउँदा अपनाउँदै पनि रु. १,०००।–भन्दा कम आर्थिक सहयोग गर्ने दाताहरुको नाम छुट्न गएकोमा अन्यथा नमानी दिनुहुन सम्पूर्णसँग विनम्र अनुरोध गर्दै एवं सद्गुरुदेवहरुसँग क्षमा माग्दै रु. १,००१ ।– देखि माथि नगद तथा जिन्सी सहयोग गर्नुहुनेहरुको नामावली र ठेगाना र उपलब्ध सहयोग यस पत्रिकामा समावेश गरिएको छ ।

# पाँच हजार तलको रकम दिने दाताहरूको नामावली:

| | | |
|---|---|---|
| कुलबहादुर कार्की | काठमाडौँ | १०९०।- |
| सानुमैया, डा. महावीर विष्ट | काठमाडौँ | ८०१५।- |
| भरत प्रसाद शर्मा | काठमाडौँ | १०८० ।- |
| लक्ष्मण कार्की | काठमाडौँ | १००० ।- |
| भवानीप्रसाद खरेल | सिक्किम गाण्टोक | २००५।- |
| किशोर अकेला | गोरखा | १००५ ।- |
| सैलुप, नुपुर भासु | तनहुँ | १००५ ।- |
| बलराम कार्की बौद्ध | काठमाडौँ | २५००।- |
| विष्णु बहादुर पौडेल | ले.न.पा. -१२ | ११११ ।- |
| दुर्गा देवी अधिकारी | ले.न.पा. -१२ | १००५ ।- |
| विश्वनाथ सुवेदी | गगनगौडा | १०१० ।- |
| तारानाथ तिवारी | ले.न.पा. -१२ खुदी | १००५ ।- |
| रामबहादुर गुरुङ | पो.उ.म..न.पा. -१० | १०१५ ।- |
| पदमकुमारी गुरुङ | ले.न.पा. -१२, ढुंगेपाटन | १००५ ।- |
| दुर्गाप्रसाद सुवेदी | ले.न.पा. -१२, ढुंगेपाटन | ११११ ।- |
| फणिन्द्र राज कोईराला | ले.न.पा. -१२, ढुंगेपाटन | १५५० ।- |
| उमानाथ सुवेदी | ले.न.पा. -१२, ढुंगेपाटन | ११२० ।- |
| सोमनाथ वास्तोला | ले.न.पा. -१२, ढुंगेपाटन | ११११ ।- |
| मुक्ति प्रसाद तिवारी | ले.न.पा. -१२, ढुंगेपाटन | ११११ ।- |
| दुर्गादत्त भुर्तेल | ले.न.पा. -१२, ढुंगेपाटन | ११११ ।- |
| नारायणप्रसाद पौडल | ले.न.पा. -१२, ढुंगेपाटन | ११२० ।- |
| चुडामणी बराल | ले.न.पा. -१२ ढुंगेपाटन | ११२० ।- |
| मानव मेडिकल फर्म | ले.न.पा. -१२ ढुंगेपाटन | ११११ ।- |
| रामकृष्ण पौडेल | ले.न.पा.-१२ रामबजार | १००५ ।- |
| श्रीमाया पौडेल (गुरुङ) | ले.न.पा.-१२ रामबजार | १००५ ।- |
| नारायण सुवेदी (ठूलनानी) | ले.न.पा.-१२ रामबजार | ११५० ।- |
| भरतराज ओझा (शक्ति डेरी) | ले.न.पा.-१२ पावरहाउस | १००५ ।- |
| डिल्लीराम गुरुङ | ले.न.पा.-१ | १००५ ।- |
| लालबहादुर | ले.न.पा.-१ | १००५ ।- |
| जीवन सापकोटा | ले.न.पा. -१२ | २००५।- |
| अर्जुन बस्नेत | ले.न.पा.-१ | १००५ ।- |
| स्व. हरिबहादुर मल्ल | ले.न.पा.-१२ गगनगौडा | १००५ ।- |
| नानुका कमर | ले.न.पा. -१२ | १००५ ।- |
| देव कुमारी शाही | ले.न.पा. -१२ खुदी | ११११ ।- |
| राधा गौतम | ले.न.पा. -१२ खुदी | १००१ ।- |
| कल्पना गोदार | ले.न.पा. -१२ खुदी | १००५ ।- |
| मिना सुवेदी | ले.न.पा. -१२ खुदी | १००५ ।- |
| सानुमाया लामिछाने | ले.न.पा. -१२ खुदी | १०२० ।- |
| रमा नेपाली | ले.न.पा. -१२ खुदी | ११०५।- |
| कृष्णबहादुर पौडेल | ले.न.पा. -१२ खुदी | ११११ ।- |
| रामचन्द्र पौडेल | ले.न.पा. -१२ खुदी | ११११ ।- |
| राधा लामिछाने | ले.न.पा. -१२ खुदी | १००५ ।- |
| सरस्वती खनाल | ले.न.पा. -१२ खुदी | १११५ ।- |
| गोपीचन्द्र खनाल | ले.न.पा. -१२ खुदी | १००५ ।- |

| | | |
|---|---|---|
| सिर्जना खत्री | रुपाकोट | १०३०।- |
| नन्दलाल आचार्य | ले.न.पा.-१२ | ११२५।- |
| मनोज शर्मा | मुस्ताङचोक | १००५।- |
| कृष्णप्रसाद अधिकारी | ढुंगेपाटन | १०१५।- |
| यमबहादुर गुरुङ | | १०१०।- |
| धर्मराज कुइकेल | ले.न.पा.-६ | १०१५।- |
| सुमित्रा कडेल | ले.न.पा. -१२ खुदी | १६६४।- |
| प्रमिला खनाल ढकाल | ले.न.पा. -१२ खुदी | २५०५।- |
| भानुभक्त सापकोटा | ले.न.पा. -१२ खुदी | ११११।- |
| गजेन्द्रप्रसाद च्वाई | ले.न.पा. -१२ खुदी | ११११।- |
| भीमबहादुर के.सी. | सैनिक | १००५।- |
| देवेन्द्र हमाल | पो.उ.म.न.पा.-२ | १११५।- |
| भेषबहादुर कार्की | पो.उ.म.न.पा.-१७ विरौटा | ११११।- |
| शालिग्राम देवकोटा | पो.उ.म.न.पा.-२ अर्चलबोट | १००५।- |
| सावित्री, एलिसा बराल | सृजनाचोक | १०१०।- |
| स्व. कृष्णप्रसाद पहारी | पो.उ.म.न.पा. -६ | १०१०।- |
| दामोदर प्रसाद पण्डित | | २२५०।- |
| मुसुरी कुमाल | ले.न.पा. -१२ सोटा | १३००।- |
| जगन्नाथ पौडेल | ले.न.पा. -१२ | ११११।- |
| समरबहादुर देउजा | ले.न.पा. -८ | ११०५।- |
| धनमाया आचार्य | ले.न.पा. -१२ | ११११।- |
| हरिप्रसाद धमला | ले.न.पा. -१३ | १००५।- |
| जमुना कोइराला | ले.न.पा. -११ | १००५।- |
| समिर ओझा | | १००५।- |
| गोविन्दराज घिमिरे | | ११११।- |
| केदारनाथ भुर्तेल | ले.न.पा.-१२ | ११०५।- |
| ढाकाराम लामिछाने | ले.न.पा.-१२ | ११११।- |
| शान्ता, टिकाराम लामिछाने | ले.न.पा.-१२ | ४१०५।- |
| ऋषिराम लामिछाने | ले.न.पा.-१२ | १११५।- |
| डम्बरकुमारी गुरुङ | ले.न.पा.-१२ | २५००।- |
| विष्णुमाया पौडेल | ले.न.पा.-१२ | १०००।- |
| देवी अधिकारी | | १०००।- |
| धर्मकुमारी वास्तोला | | १००५।- |
| सीता के.सी. | | ११०५।- |
| कुलप्रसाद गुरुङ (काइँला) | लेखनाथ–८ | १२००।- |
| दिनेशमान बज्राचार्य | पो.उ.म.न.पा. सभागृह चोक | ४१०५।- |
| सरस्वती अधिकारी | ले.न.पा.-१२ मिलनचोक | ३०००।- |
| भोलामणि गौतम | | २२००।- |
| प्रीयसा अधिकारी | काठमाडौँ (लाजिम्पाट) | १०१५।- |
| मधुमाया भण्डारी | ले.न.पा.-१२, खुदी | १०००।- |
| खेमराज सुवेदी | ले.न.पा.-१२, ढुंगेपाटन | १५००।- |
| महेश्वर सुवेदी | | १००१।- |
| सुरेन्द्रराज कोइराला | ले.न.पा. -१२ | १००५।- |
| नवराज सुवेदी | ले.न.पा. -१२ | १००५।- |

| रामबहादुर बुढाथोकी | ले.न.पा. ढुंगेपाटन | १००५।- |
|---|---|---|
| युवराज बराल | ले.न.पा. ढुंगेपाटन | १००५।- |
| टेकमान बुढाथोकी | ले.न.पा. ढुंगेपाटन | ११२५।- |
| असिल सुवेदी | ले.न.पा. ढुंगेपाटन | १५०१।- |
| विष्णु, चेतनाथ भण्डारी | ले.न.पा. ढुंगेपाटन | ११११।- |
| यमबहादुर गुरुङ | पो.उ.म.न.पा.-४ | १००५।- |
| आरती, रवि गुरुङ | यु.के. | १००५।- |
| श्रीराम बराल | | १०२१।- |
| सरस्वती गुरुङ | | १००५।- |
| डिलमाया गिरी | | ११००।- |
| एकुमाया गिरी | | १००५।- |
| अमृता गिरी | | ११०५।- |
| छविलाल श्रेष्ठ | आश्रम ठेकेदार | १५०२ ।- |
| नन्दकला पहारी | पो.उ.म.न.पा. वडा नं. ६ | ११०५ ।- |
| विष्णुप्रसाद भट्टराई | पो.उ.म.न.पा. वडा नं. ५ | १००५ ।- |
| तारा थापा | | १००० ।- |
| देबु गिरी | तनहुँ | १००० ।- |
| यमुना पौडेल गिरी | | ५००० ।- |
| पूर्णिमा जोशी श्रेष्ठ | | १००६ ।- |
| लक्ष्मी सुवेदी | लेखनाथ – ७ | १००५ ।- |
| भरत गिरी | शिशुवा ले.न.पा. –८ | २५०० ।- |
| जमुना गिरी | शिशुवा ले.न.पा. –८ | १००० ।- |
| अनकुमारी र रुकविना गुरुङ | | २१०५ ।- |
| हरिप्रिय पौडेल | ले.न.पा. | १००५ ।- |
| सरस्वती गुरुङ्ग | | १००५ ।- |
| जगबहादुर गोदार | ले.न.पा. –१२, खुदी | १००५ ।- |
| चोलाकान्त च्वाई | ले.न.पा.– १२ | १११५ ।- |
| टेकनाथ गौतम | ले.न.पा.– ११ बेगनासताल | ११११ ।- |
| हरिमाया गहतराज | पो.उ.म.न.पा.– २ | २००५ ।- |
| हिमाल भवानी जोशी | पो.उ.म.न.पा. | ११११ ।- |
| विजय पौडेल | ले.न.पा.–१२, खुदी | १००५ ।- |
| केदार भूर्तेल | ले.न.पा.–१२, खुदी | १००५ ।- |
| महादेव गौतम | ले.न.पा.–१२, खुदी | १५०५ ।- |
| देवका अधिकारी क्षेत्री | ले.न.पा.–१२, खुदी | ११२५ ।- |
| हरिमाया ढकाल | ले.न.पा.–१२, खुदी | १००५ ।- |
| होमप्रसाद अधिकारी | काठमाडौँ | १००५ ।- |
| सबिता सेन | | ११०० ।- |
| डिल्लीप्रसाद बराल | पो.उ.म.न.पा. –७ | १००५ ।- |
| विष्णुप्रसाद पोखरेल | ले.न.पा.–१२ | २००१ ।- |
| श्रीराम पोखेल | ले.न.पा.–१२ | ११०० ।- |
| भरतराज तिवारी | ले.न.पा.–९ | १००८ ।- |
| झलकनाथ गौतम | नापी कार्यालय, कास्की | १००५ ।- |
| चन्द्रकुमारी पौडेल | ले.न.पा.–१२, खुदी | १५०० ।- |
| दुर्गा अधिकारी | पो.उ.म.न.पा.–५ | ११०५ ।- |

| हरिमाया के.सी. | | ११०५ ।- |
|---|---|---|
| लेख कुमार बसौला | | १००० ।- |
| हरिमाया अधिकारी | | ११५१ ।- |
| सूर्यप्रसाद पौडेल | | ३००० ।- |
| उत्तमनाथ सापकोटा | ले.न.पा. –१२, खुदी | २००५ ।- |
| राधा सापकोटा | ले.न.पा. –१२, खुदी | २००५ ।- |
| अम्बरबहादुर साम्बा (अमरे) | ले.न.पा. –१२, खुदी | ११०५ ।- |
| देवनाथ सापकोटा | ले.न.पा. –१२, खुदी | ११०० ।- |
| रमादेवी कुमाल | ले.न.पा. –१२, खुदी | ११११ ।- |
| राजु भुजेल | ले.न.पा. –१२, खुदी | ११११ ।- |
| बाबुराम खनाल | ले.न.पा. –१२, खुदी | १५७५ ।- |
| कृष्णप्रसाद खनाल | ले.न.पा. –१२, खुदी | ११११ ।- |
| बामदेव खनाल | ले.न.पा. –१२, खुदी | ११११ ।- |
| गोविन्द अधिकारी | ले.न.पा. –१२, खुदी | १५०५ ।- |
| हिमलाल अधिकारी | ले.न.पा. –१२, खुदी | १००५ ।- |
| सारदा अधिकारी | ले.न.पा. –१२, ढुंगेपाटन | १००५ ।- |
| शिवदर्शन शिवालय | ले.न.पा. –१२, ढुंगेपाटन | २५०० ।- |
| विजय लक्ष्मी पौडेल | ले.न.पा. –१२, ढुंगेपाटन | १००५ ।- |
| कृष्णप्रसाद सुवेदी | ले.न.पा. –१२, ढुंगेपाटन | १००५ ।- |
| जानकी लामिछाने | ले.न.पा. –११ | १५०० ।- |
| विष्णु न्यौपाने | ले.न.पा. –१२ | ११०५ ।- |
| लोकराज ढकाल | ले.न.पा. –१२ | २५०० ।- |
| होमबहादुर सिंह | ले.न.पा. –१२, ढुंगेपाटन | १००५ ।- |
| क्या. होमबहादुर क्षेत्र | ले.न.पा. –१२, खुदी | १११५ ।- |
| मधुमाया भण्डारी | ले.न.पा. –१२, खुदी | १५१५ ।- |
| मुना लामिछाने | पो.उ.म.न.पा.-१२, अमरसिंह | १०५१ ।- |
| पूजा तिमिल्सिना | ले.न.पा. –१२, खुदी | १११५ ।- |
| कौशिला भट्टराई | ले.न.पा. –१२, खुदी | १००५ ।- |
| कालिका पौडेल, रामचन्द्र पौडेल | | ११११ ।- |
| ध्रुवनाथ अधिकारी | ले.न.पा. –११ | १००८ ।- |
| गोरक्षनाथ सिद्धाश्रम पीठ पचभैया | | १००८ ।- |
| दिनानाथ ढकाल | ले.न.पा. –११ | १००८ ।- |
| दिपक अधिकारी | ले.न.पा. –११ | १००८ ।- |
| दिनेश चन्द्र पौडेल | ले.न.पा. –१२, खुदी | ११११ ।- |
| रमेश श्रेष्ठ | ले.न.पा.–१२ पावरहाउस | २२२२ ।- |
| सुरेश गुरुङ | ले.न.पा. –१ सैनिक | १००५ ।- |
| विन्दु विमली | लेखनाथ –१२ रामबजार | १०५१ ।- |
| हिमाल भवानी जोशी | पोखरा | ११०० ।- |
| लक्ष्मी | सिसुवा स्थान | १००० ।- |
| ललित इन्टरप्राइजेज | पोखरा | ११०० ।- |
| कमलनाथ कुँवर | लेखनाथ –१२ खुदी | १००० ।- |
| नारायणी | वेगनास | १५०० ।- |
| टुल्कीमाया सापकोटा | लेखनाथ आश्रम | ११०० ।- |
| लक्ष्मी ढकाल (क) | लेखनाथ–१२ खुदी | २५०० ।- |

| लीला अधिकारी | लेखनाथ १२ खुदी | १५७५ ।- |
|---|---|---|
| जानुका के.सी. | पो.उ.म.न.पा. –८ | ११११ ।- |
| जनक राज पराजुली | लेखनाथ –१२ गगनगौडा | ११११ ।- |
| शिव प्रसाद भट्टराई | लेखनाथ १२ खुदी | १५०५ ।- |
| लवराज तिमिल्सिना | लेखनाथ १२ खुदी | १००५ ।- |
| योगमाया के.सी. | पो.उ.म.न.पा.–१६ लामाचौर | १००५ ।- |
| नारायण हरि तिवारी | लेखनाथ–१२ खुदी | २५०० ।- |
| चन्द्रकुमारी त्रिपाठी | लेखनाथ–८ | १००५ ।- |
| इन्द्रप्रसाद पौडेल | लेखनाथ–१२ खुदी | १००५ ।- |
| हरिप्रसाद पौडेल | लेखनाथ–१२ खुदी | १५०० ।- |
| शिवराज पौडेल | लेखनाथ–१२ खुदी | ११०५ ।- |
| रामहरी तिवारी | | २५०० ।- |
| जीवन प्रसाद भुर्तेल | लेखनाथ–८ | १००५ ।- |
| रामजी प्रसाद,सीता न्यौपाने | लेखनाथ–१२ खुदी | १११५ ।- |
| नानुमाया आचार्य | पोखरा मालेपाटन | १५१५ ।- |
| लक्ष्मी तञ्या | पोखरा पृथ्वीचोक | १०५१ ।- |
| दैनिक सप्लायर्स | तालचोक | १११५ ।- |
| बुद्धिबहादुर लामिछाने | ले.न.पा. –१२ | १००५ ।- |
| कलाधर लामिछाने | लेखनाथ १२ खुदी | ११११ ।- |

| सोमनाथ बराल, निर्मला बराल | पो.उ.म.न.पा. रामबजार | १००८ ।- |
|---|---|---|
| ओमसिद्धि लामिछाने | ले.न.पा. –१२ | १००८ ।- |
| टेकनाथ खनाल | लेखनाथ १२ खुदी | १००८ ।- |
| अणनाथ बराल | लेखनाथ १२ खुदी | १००८ ।- |
| कमला तिवारी | लेखनाथ १२ खुदी | ११११ ।- |
| श्रीकान्त अधिकारी | ले.न.पा.–१२ | ३००० ।- |
| विष्णुप्रसाद भण्डारी | ले.न.पा. –८ | ११०० ।- |
| गोकर्ण अधिकारी, तारा अधिकारी | लेखनाथ –१० | २००० ।- |
| शिवराज लामिछाने | लेखनाथ–१२ खुदी | १११५ ।- |
| जानुका शर्मा | भरतपुर, चितवन क्षेत्रपुर | १००५ ।- |
| मैना पौडेल | लेखनाथ–१२ खुदी | १००५ ।- |
| उमानाथ न्यौपाने | ले.न.पा. –१२, खुदी | १०२५।- |
| गोविन्द प्रसाद पौडेल | लेखनाथ–१२ खुदी | ११११ - |
| ज्यो. पं. कृष्णप्रसाद पौडेल | लेखनाथ–१२ खुदी | ११०० ।- |
| मीना बराल | पोखरा-७ सृजनाचोक | १००५ ।- |
| शंकर बराल | पोखरा-सृजनाचोक | ११०० ।- |
| बालकृष्ण तिमिल्सिना | लेखनाथ-१२ | १०२०।- |
| रंगीला शर्मा | पोखरा-१७, छोरेपाटन | १००२। |
| पुनम लम्साल | स्याङ्जा | १००३। |

## रु. पाँच हजारदेखि माथिका दाताहरूको नामावली:

| सिद्राश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय | पो.उ.म.न.पा.-१०, रामघाट | ५०,०००।- |
|---|---|---|
| भूपेन्द्र र नमा खाँण | ले.न.पा.–१२, ढुंगेपाटन | ३७,०००।- |
| लक्ष्मी र नारायण पौडेल | ले.न.पा. –१२, खुदी | २५,५२५।- |
| ऋषिराम सापकोटा र विष्णु सापकोटा | ले.न.पा. –१२, खुदी | १५,५७५।- |
| सिद्राश्रम शक्तिकेन्द्र सम्पर्क कार्यालय | लेखनाथ | ३०,०००।- |
| डिल्लीराम पौडेल | ले.न.पा. –१२, खुदी | ११११११।- |
| रामकुमार श्रेष्ठ | पो.उ.म.न.पा. –८ | ११०००।- |
| दामोदर र विष्णु पराजुली | ले.न.पा. –८ | ११११११।- |
| रिमाल हार्डवयर | ले.न.पा. –१२ | ५०५१।- |
| अनिता ढकाल | पो.उ.म.न.पा. –१७ | ५००५।- |
| कल्पना ढकाल | ले.न.पा. –१२, खुदी | ५५५५।- |
| रमेश र सीता सापकोटा | ले.न.पा. –१२, खुदी | ५०२५।- |
| सुमित्रा खाँण र लालबहादुर खाँण | ले.न.पा. –१२, खुदी | ५०५५।- |
| सुशीला र कृष्णराज ढकाल | ले.न.पा. –१२, खुदी | १०५१।- |
| राधा सापकोटा | लेखनाथ आश्रम | ५००५।- |
| जीवनाथ ढकाल | लेखनाथ आश्रम | ५००५।- |
| बलराम पौडेल | लेखनाथ चोक | ५००५।- |
| रीता थापा | ले.न.पा. –१२, खुदी | ५००५।- |
| तीर्थराज ढकाल | ले.न.पा. –१२, खुदी | ५००५।- |
| सीता बास्तोला | ले.न.पा. –८ | ५४००।- |
| रामकृष्ण जि.सि. | ले.न.पा. –३ | ५०५०।- |
| प्रेमचन्द्र उपाध्याय | पो.न.पा. –८ पोखरा | १००००।- |
| ईश्वरी भारती | ले.न.पा. –८ शिशुवा | १०००५।- |
| प्रतिमा पौडेल | पो.न.पा.–४, विजयपुर | ८३००।- |
| गौमती थापा | पो.उ.म.न.पा.–६, जरेबर | ५०००।- |

| प्रेमप्रसाद गौतम | पो.उ.म.न.पा.-१२, अमरसिं | ५१०५।- |
|---|---|---|
| दुर्गादेवी तिमिल्सिना | पो.न.पा. –१६, वैदाम | ६००५।- |
| स्व. देवीप्रसाद पौडेल | खुदी | ५५२०।- |
| भोजराज सापकोटा | तारकाङ् | ५०५५।- |
| लक्ष्मी ढकाल “ख” | ले.न.पा. –१२, खुदी | ५००५।- |
| शंकर र गंगा पौडेल | ” | ५००१।- |
| सरिता खत्री | ” | ५५००।- |
| रिता थापा | ले.न.पा. –१२ | ५००५।- |
| भीमप्रसाद बास्तोला | ” | ५३००।- |
| जगतकुमारी | ” | १००००।- |
| पदमा कुमारी गिरी | ले.न.पा. –१३ | ५००० ।- |
| अमृता गिरी | ले.न.पा. –८ | ८००० ।- |
| कर्णेल मदन के.सी. | ले.न.पा. –१२, खुदी | ५०००।- |
| बलराम बराल | ले.न.पा. –१२, बरालथर | ५०००।- |
| प्रशान्त क्षेत्री | पो.उ.म.न.पा. –४, गैह्रापाटन | ५००५।- |
| प्रतिभा र विदुर सापकोटा | ले.न.पा. –१२, खुदी | ११११११।- |
| पार्वती शाह | | ११११११।- |
| प्रतिभा र विदुर सापकोटा | ले.न.पा. –१२, | ५००५।- |
| मीरा तुलाचन | पो.उ.म.न.पा. –९, नागढुङ्गा | ५०५१।- |
| रामराज अधिकारी | ले.न.पा. –१२, खुदी | ५००५।- |
| खेम शेरचन | पो.उ.म.न.पा. –८, सिमलचौर | सौ. रङ्ग |
| सरस्वती अधिकारी | ले.न.पा. –१२, नहरचोक | ५००५।- |
| दिनबन्धु पौडेल | पोखरा-७ | ५,५५५।- |
| गौमती गुरुङसेनी | स्याङ्जा, ढापुका सिमलभञ्ज्याङ | १२,००५।- |
| मेघराज घिमिरे | पोखरा-१० | ५००५।- |

# सम्पर्क कार्यालय लेखनाथको तर्फबाट

गण्डकी अञ्चल कास्की जिल्ला लेखनाथ नगरपालिका वडा नं. ७ वडहेर (सानो डाडाँ) मा अवस्थित सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय लेखनाथ आध्यात्मिक उच्चता प्राप्त गर्ने सशक्त धरोहरको मातहतमा रही आरती संचालन केन्द्रको रुपमा अगाडि बढ्दै जाँदा सम्बन्धित क्षेत्रका साधकसाधिका, भक्तजन एवं तपस्वीहरुको सक्रिय जागरणका बावजुद स्थापित गुरुदेवको नवनिर्मित आश्रम भवन खुदीको समुद्घाटनको सुअवसरमा उत्तरोत्तर प्रगति एवं उन्नतिका लागि प्रत्यक्ष वा अप्रत्यक्ष योगदान दिनुहुने महानुभावहरुप्रति हार्दिक कृतज्ञता प्रकट गर्दछौं ।

सिद्धाश्रम शक्ति केन्द्रको नाम सुन्ने बित्तिकै हाम्रो मनमा विभिन्न तरङ्गहरु उत्पन्न हुन सक्दछन् । त्यसैले यसलाई दुई किसिमबाट अर्थ लगाउन सकिन्छ । एक त सिद्धि र शक्ति प्राप्त गरेका सद्गुरुहरु (भगवान्) रहने वा बस्ने ठाउँ । दोस्रो सिद्धि र शक्ति प्राप्त गर्न इच्छुक महानुभावहरु गुरुहरुको सनिध्यमा रही जप-तप-साधना र ध्यान गर्ने पवित्र ठाउँ । जुन अर्थ लगाएता पनि भौतिकता र विज्ञानले अति उच्चतम स्थान लिइरहेको वर्तमान घोर कलिकालमा मानिसमा उब्जिएका अशान्ति, पीडा, निराशाजस्ता कुराहरुले सताइरहेको अवस्थामा त्यसबाट मुक्ति पाउनको लागि केही सोच्नै पर्ने र गर्ने पर्ने बेला आएकोमा जब नेपालमा सिद्धाश्रम शक्ति केन्द्रद्वारा प्रतिपादित अवधारणाहरु अगाडि आए । त्यसका माध्यमहरुबाट आध्यात्मिक उच्चता प्राप्त गर्न सकिने तथ्य निर्विवाद छ । सिद्धाश्रम शक्ति केन्द्रले हाल देखिएका धार्मिक आडम्बरलाई प्रश्रय नदिइकन केही पाउन केही गर्नुपर्छ अर्थात् भगवान् श्रीकृष्णले गीतामा अर्जुनलाई कर्म गर फलको आशा नगर भनी दिएको शिक्षालाई अक्षरसः व्यवहारमा उतार्ने प्रयास गरेको छ । यसको सप्रमाण उदाहरण हो ध्यान र साधना । ध्यान र साधना गर्नका लागि व्यक्ति वा शिष्यले आफ्नो शरीरलाई भनिए अनुसार कर्म गर्नुपर्छ । ध्यान गर्दै साधना गर्दै अगाडि बढेमा त्यसबाट अवश्य नै केही न केही दिव्यशक्तिहरु प्राप्त गर्न सकिन्छ । जसरी एउटा कमजोर विद्यार्थीले निरन्तररुपमा आफ्नो पढाइलाई एकाग्र भएर अगाडि बढायो भने अन्ततोगत्वा अपेक्षित सफलता हात लाग्छ । त्यसरी नै सिद्धाश्रम शक्ति केन्द्र, जहाँ परमपूज्य सद्गुरुदेवहरु श्री श्री महायोगी गुरु गोरखनाथ र परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजका सूक्ष्म उपस्थिति भइरहेका हुन्छन्, जसको सूक्ष्म आशीर्वादबाट अदृश्यरुपमा हामीमा अपेक्षित सिद्धि र शक्ति प्राप्त हुन थाल्दछन् । त्यसैले भन्ने मात्र होइन, स्वयं अनुभव गरेर हेर भन्ने उद्घोषका साथ विभिन्न चाडबाडहरुमा विभिन्न देवीदेवताहरुलाई स्मरण गर्न सम्बन्धित मन्त्रहरु जप गर्दै साधना गर्दै नियमितरुपमा अगाडि बढाउन मार्ग प्रसस्त गरेको व्यहोरा जगजोहर नै छ ।

आनुहोस्, जुर्मुराउनुहोस् र आफ्नो इच्छाशक्तिलाई आध्यात्मिक जागरणतर्फ उन्मुख गराउनुहोस् जसका माध्यमबाट आफूलाई मानिसबाट मानव बनाउन सक्नुहोस् ।

अन्तमा सिद्धाश्रम शक्ति आरती संचालन केन्द्र खुदीको आश्रम भवन उद्घाटन कार्यक्रमबाट त्यस क्षेत्रका आमाबुबा दाजुभाइ, दिदि-बहीनीहरु तथा अन्य महानुभावहरुमा परम पुज्य सद्गुरुदेवहरुबाट आशीर्वाद एवं क्षेत्रका महानुभावहरुको सकारात्मक भावको परमपूज्य सद्गुरुदेवहरुको पक्कै पनि उच्च मुल्याङ्कन हुनेछ भनी प्रार्थना गर्दै यस आश्रमको उत्तरोत्तर प्रगति एवं उन्नतिको कामना गर्दै गुरुकार्यमा खट्नु हुने सम्पूर्ण महानुभावहरुप्रति अनुकरणीय भाव राख्दै लेख्ने क्रममा भए गरेका गल्ती, कमजोरी र न्यूनताहरुउपर गुरुदेवहरुसमक्ष क्षमा माग्दै अहिलेलाई विदा हुने अनुमति चाहन्छु ।

*जीवनाथ ढकाल, सि.श.के.सं.का. लेखनाथ, कास्की, पोखरा ।*





# सिद्धाश्रम शक्ति केन्द्र प्रचारप्रसार कक्ष लेखनाथ-१२ खुदीको शिव साधना तथा उद्घाटन कार्यक्रम समितिको नामावली

*मिति २०७० आषाढ १ गते बसेको भेलाबाट निम्न बमोजिम समिति र उपसमितिहरू गठन भयो :-*

## मूल समिति

संयोजक : लक्ष्मी पौडेल
सहसंयोजक : राजकुमारी गुरुङ
सहसंयोजक : विदुर सापकोटा
सचिव : ऋषिराम पोखरेल
कोषाध्यक्ष : नमा खाँण
सह-कोषाध्यक्ष : दुर्गा प्रसाद सुवेदी

**सदस्यहरुः**

| | | |
|---|---|---|
| विष्णु न्यौपाने | कृष्ण प्रसाद पौडेल | लक्ष्मी ढकाल 'ख' |
| लीला खड्का | प्रतिभा सापकोटा | सुमित्रा कँडेल |
| प्रमिला ढकाल | सरस्वती अधिकारी | मीना ढकाल |
| रीता थापा | सरस्वती खनाल | विष्णु अधिकारी |
| कल्पना ढकाल | राधा पौडेल | चन्द्र कुमारी पौडेल |
| गंगा पौडेल | लीला अधिकारी | तिला सापकोटा |
| सुशिला ढकाल | सरिता खत्री | |

## सल्लाहकार समिति

| | | |
|---|---|---|
| डिल्लीराम पौडेल | दुर्गा प्रसाद सुवेदी | दन्धिराम भट्टराई |
| विष्णु प्रसाद पोखेल | भवानी प्रसाद ढुंगाना | राममणि अधिकारी |
| तारा अधिकारी | श्रीराम पोखेल | हरिभक्त कुँवर |
| उमनाथ न्यौपाने | ऋषिराम ढुंगाना | कमलनाथ कुँवर |

## उपसमितिहरू

**मञ्च सजावट**

संयोजक– गजेन्द्र प्रसाद च्वाई सहसंयोजक– विदिर सापकोटा
सदस्यहरू– विष्णु अधिकारी, राधा लामिछाने

**अर्थ व्यवस्थापन समिति**

संयोजक– नमा खाँण
सहसंयोजक– दुर्गा सुवेदी, विदुर सापकोटा, सोमनाथ वास्तोला

**पूजन तथा हवन उपसमिति**

संयोजक – कल्पना ढकाल
सहसंयोजक – प्रमिला ढकाल, सरिता खत्री, मीना ढकाल, कृति वराल, चन्द्रकुमारी पौडेल, सुमित्रा खाँण, प्रतिभा सापकोटा

**साधना व्यवस्थापन**

संयोजक – राजकुमारी गुरुङ
सदस्य – विष्णु अधिकारी, सरस्वती खनाल, कल्पना गोदार, सुशिला ढकाल

**भण्डार तथा भान्छा व्यवस्थापन**

संयोजक – गंगा पौडेल, जगन्नाथ पौडेल
सदस्य – भविराज च्वाई, कृष्ण प्रसाद पौडेल, कृष्ण प्रसाद सुवेदी ढुंगेपाटन, कमल भण्डारी, लीला अधिकारी, सावित्री अधिकारी

**आवास तथा बसोबास**

संयोजक – हरिप्रसाद च्वाई
सहसंयोजक – रीता थापा
सदस्यहरू – खेमराज वास्तोला, भविराज च्वाई

**स्वागत सत्कार**

संयोजक – लीला खड्का
सहसंयोजक – राधा पौडेल
सदस्यहरू – प्रमिला पौडेल, भावना ढकाल

**महिला परिचालन उपसमिति**

संयोजक – तारा अधिकारी

**प्रचारप्रसार उपसमिति**

संयोजक – रामराज अधिकारी
सहसंयोजक – विष्णु न्यौपाने
सदस्यहरू – सीता सापकोटा, सुमित्रा कँडेल, लक्ष्मी ढकाल, सुशिला ढकाल

**स्मारिका प्रकाशन उपसमिति**

संयोजक – ऋषिराम सापकोटा
सहसंयोजक – नमा खाँण
सदस्यहरू – लक्ष्मी पौडेल, रीता थापा, रामराज अधिकारी

**भजनकीर्तन उपसमिति**

संयोजक – सोमनाथ वास्तोला
सहसंयोजक – मुक्ति प्रसाद तिवारी
सदस्यहरू – भोलामणि गौतम, मार्कण्ड अधिकारी, श्रीराम अधिकारी, रमा नेपाल, माया पौडेल, कृति वराल

**शोभायात्रा उपसमिति**

संयोजक – प्रतिभा सापकोटा
सदस्यहरू – तारा अधिकारी, विष्णु अधिकारी, हिरा तिमिल्सिना, गंगा पौडेल, लीला अधिकारी, सरस्वती खनाल, कल्पना ढकाल, सरस्वती लामिछाने, शान्ता लामिछाने, गीता पौडेल, सुशिला ढकाल, लक्ष्मी ढकाल 'क', लक्ष्मी ढकाल 'ख', सुमित्रा खाँण, सुमित्रा कँडेल, कल्पना गोदार, पार्वती अधिकारी, जगन्नाथ पौडेल, तिला सापकोटा ।

कविता

# सिद्धाश्रमका हौं एउटै जहान

–हरिप्रिया पौडेल

गुरु हाम्रा अति नै महान्, सिद्धाश्रमका हौं एउटै जहान
किरातेश्वर महादेवले गुरु नजिक राख्नु भो,
त्यहाँका भक्तजन अति लाग्नु भो ।
२०६८ साल १२ मा शिलान्यास गऱ्यो
गुरु भवन बनाउनलाई लागि तिमी पऱ्यौ ।
खुदीका सब जनको मिलोमतो मिलायौ
जग्गा अनि गुरु भवन तिमीले बनायौ ।
धन्य धन्य रहेछ मनुष्य चोला
गुरुकृपा खुदीलाई कति मिल्यो होला ।
भवन थाल्दा हामीसँग थिएन पैसा रत्ती
गुरुका शिष्यका हेर साहस कति ।
छैन पैसा भन्दाभन्दै भवनै सक्यौं नि
गोरक्ष निखिल आश्रम खुदीमा राख्यौं नि ।
भवन राम्रो बन्यो तिर्नु छ नि धेर
गुरु कृपा मिल्छ तिर्छौं एक फेर ।
आशीर्वाद गुरुको सधैँ हामीलाई चाहिन्छ
दिलो ज्यान दिएर गुरुमा लाइन्छ ।
एउटै हामी सिद्धाश्रम सब परिवार
नाता छैन केही सबै छुम् नि बराबर ।
साना आउँछ भाइ बहिनी ममताले भन्यौं
ठूला हाम्रा बाबा दिदी सबले सम्मान गऱ्यौं ।
आफ्नो आर्को भन्ने अरु धेरै ठाउँ छन्
गुरु कृपा लिन मात्र यो ठाउँमा आउँछन् ।
आफ्नो अर्को भन्ने होइन सुन्दा चित्त दुख्छ
खुल्ला दिलले बोल्यौं हाँस्यौं त्यही भए पुग्छ ।
एउटै सन्तान हौं नि जति यहाँ आछौं
जुनी जुन नचुडिने गुरु माया पा...छौं ।

बिर्सिएर भन्ने होइन सन्तान कसैलाई नि
आमा बुबा दिदी दाइ सबै भाइ बैनी ।
यो मनको कालो मैलो साधनाले धुनी
सुख दुःख जे परे पनि गुरु छेउमै रुनी ।
तन्त्र मन्त्र यन्त्रको विज्ञान हो जान
गोरख निखिल गुरु हाम्रा अति नै महान् ।
जसलाई यहाँ जे पनि नि सबलाई एकै दुःखोस्
जस्तो काम परे पनि हामीबाटै फुकोस् ।
ठूलो सानो भन्ने होइन सबै बराबरी
ब्रह्माण्डनायक गुरु का त सबै छोराछोरी ।
पक्कै पैले नाता हाम्रो बल्ल भेट भाछ
गुरु शिष्य नाताले खोजी खोजी ल्याछ ।
बाबा हाम्रा शिव नै हुन् माता पार्वती
किन किन हजुरहरुको लाग्छ माया अति ।
महाभारत लडाइँ पनि त्यही मनमा आछ
भड्किएर पापी मन कौरवतिर गाछ ।
सत्यवादी पाण्डवले सबलाई उतैतिर तान्छन्
सत्य नै हो ठूलो धर्म भनी कृष्ण जान्छन् ।
सत्यता र धैर्यताको मूलमन्त्र हाम्रो
धृतराष्ट्र बनी हामी केही गर्न हुन्न ।
गुरु भर परे देखी केहीले हाम्लाई छुन्न ।
गुरु वयान कति गऱ्यौ छैन गर्ने ठाउँ
कृपा मिलोस् हामी सबलाई सँगै बस्न पाऊँ ।
नभड्कियोस् मन कैल्यै सबलाई शान्ति छाओस्
गोरख निखिल युग अब छिट्टै आओस् ।
जय गुरुदेव !

*सिद्धाश्रम शक्ति केन्द्र*
*सम्पर्क कार्यालय लेखनाथ-७ खडहरे*

# परमपूज्य सद्गुरुदेवले समाजलाई दिनुभएको योगदान

**सूर्यविज्ञान**

सूर्यविज्ञानको आधार सूर्यको किरण हो । सूर्यको किरण अर्थात् विभिन्न रश्मिहरूको संयोगबाट पदार्थको प्रादुर्भाव अथवा जन्म हुन्छ । वस्तुहरूको सत्ताको अभिव्यंजक यिनै रश्मिहरू हुन् । तसर्थ यी रश्मीहरूको परस्पर संघटन नै सूर्य विज्ञानको मूल आधार हो । सूर्य विज्ञानमा संसारको प्रत्येक वस्तु अथवा पदार्थको निर्माणको शक्ति छ ।

सूर्यका किरणहरूलाई लेन्स वा अन्य कुनै माध्यमद्वारा संघटन (ऋयलअभलतचबतभ) गरेर कुनै पनि वस्तु वा पदार्थको निर्माण गर्न सकिन्छ भने कुनै एक वस्तुलाई अर्को वस्तुमा जस्तैः काठलाई फूलमा परिवर्तन गर्न सकिन्छ । तसर्थ सूर्यविज्ञान उच्चकोटिको विज्ञान हो जसको प्रयोगबाट मानवजीवनमा आवश्यक वस्तुहरूलाई प्राप्त गर्दै जीवनलाई सुखमय बनाउन सकिन्छ। तर यति महत्त्वपूर्ण विज्ञान भएर पनि यसको जानकारी वा प्रयोग भने खासै पाईदैन । यसको मुख्य कारण यससम्बन्धी सही ज्ञानको अभाव नै हो। वनारसका स्वामी विशुद्धदेवले सूर्य रश्मिबाट तमाम पदार्थ उत्पन्न गरेर समाजलाई चमत्कृत गरेका थिए। यससम्बन्धी अपूर्व ज्ञान भएर पनि गुरुदेवले यस क्षेत्रमा धेरै कार्य गर्न पाउनु भएन। कारण यही नै हो– एउटा जीवनमा कति मात्र कार्य गर्ने, कति क्षेत्रलाई मात्र समेट्ने ?

सूर्य किरणहरूको संयोगबाट वस्तु अथवा पदार्थको निर्माण हुन सक्छ भन्ने तथ्यलाई उहाँले आफ्नो अवतरणकालमा जनसमक्ष राख्नुभएको थियो । विज्ञानले सूर्यमा सात किरण हुन्छन् भनेको छ भने उहाँले सूर्यमा हजार किरण हुन्छन् भन्ने नुतन तथ्यलाई प्रस्तुत गर्नुभएको छ। यी किरणहरूको संघतन गरी वस्तु परिवर्तन गर्न सकिने सिद्धान्तको उहाँले सप्रमाण पुष्टि गर्नुभएको थियो ।

ग्भअझदभच, 1986 मा 'सूर्य सिद्धान्त एवं पदार्थ परिवर्तनु विषयमा व्याख्यान दिनको लागि अमेरिकाका ६ स्थानहरूमा आमन्त्रित गरिएको थियो । त्यस समय अमेरिकाको राजधानी वाशिंगटनमा सूर्य सिद्धान्तको प्रयोगात्मक क्रिया पद्धतिको प्रत्यक्ष विवरण मि. ब्रिवियनले लेख्नुभएको थियो । जो भारतका कटु आलोचक र अमेरिकाका विख्यात पत्रकार हुनुहुन्थ्यो।

बिसौं शताब्दीको महत्त्वपूर्ण वैज्ञानिक उन्नतिबीच गुरुदेव विश्वलाई बुझाउन चाहनुहुन्थ्यो कि सूर्य सिद्धान्तबाट एक पदार्थलाई अर्को पदार्थमा रूपान्तरित गर्न सकिन्छ, बिना कुनै जादूगरी वा सम्मोहन। यस कुराको यथार्थ पत्ता लगाउने जिम्मा पत्रकार मि. ब्रिवियनको थियो। उहाँलाई यस कुरामा विश्वास थिएन र उहाँले यस कुराको पर्दाफास गर्ने योजना बनाउनुभयो। उहाँले यसको लागि १८ विशेषज्ञहरूको एक टिम बनाउनुभयो । गोपनीयरूपमा गुरुदेवबाट हुने प्रयोगमाथि उहाँले निगरानी राख्न, परीक्षण गर्न लगाउनुभयो।

वाशिंगटनको 'जेफर्सन हलुमा दिनको तीन बजे करिव साठी मिनेटको कार्यक्रम राखियो। हलमा एक हजार व्यक्तिको लागि स्थान थियो, अन्यको लागि विभिन्न त्ख च्यानलहरू जोडिएका थिए । गुरुदेवले २० मिनेटसम्म धाराप्रवाह अंग्रेजीमा सूर्य सिद्धान्तमाथि बोल्नुभयो र भन्नुभयो कि यस सिद्धान्तबाट स्थायी रूपमा पदार्थ परिवर्तन गर्न सकिन्छ र यसबाट चिकित्सा क्षेत्रमा पनि क्रान्तिकारी परिवर्तन ल्याउन सकिन्छ । जस्तै, शरीरभित्र बनेको पत्थरलाई पानीमा परिवर्तन गरेर मूत्राशयबाट बाहिर निकाल्न सकिन्छ ।

भाषणको समापनपछि धोएर, रसायनिक परीक्षण गरेर एउटा ताजा गुलाबको फूल र एउटा काठको टुक्रा ल्याइयो । १८ सदस्यीय टिमले त्यहाँ कुनै सम्मोहन प्रयोग हुन नदिन, कुनै रसायन प्रयोग हुन नदिने वातावरण बनाएको थियो। गुरुदेवले लगाउनुभएको वस्त्र आदिको पनि परीक्षण गरिएको थियो ।

उहाँलाई काठको टुक्रा दिइयो र स्वर्णमा परिवर्तन गर्न भनियो। गुरुदेवले त्यसमाथि आफ्नो दृष्टि स्थिर गर्नुभयो, ४-५ मिनेटपछि त्यो काठको टुक्रा पहेंलो र चम्किलो धातुमा परिवर्तन हुन थाल्यो र सुन तयार भयो। प्रसिद्ध स्वर्ण विशेषज्ञ मि. ब्राउन मंचमा गएर त्यसको परीक्षण गर्नुभयो र त्यस टुक्रालाई सुनको रूपमा पाउनुभयो ।

त्यसपछि गुरुदेवलाई अत्यन्त कोमल गुलाबको फूल दिइयो र त्यसलाई शुद्ध फलाममा परिवर्तन गर्न भनियो। उहाँले त्यस फूलमाथि दृष्टि स्थिर गर्नुभयो । करिव २-३ मिनेटमा त्यो फूल फलाममा परिवर्तन भयो । प्रसिद्ध पत्रकार मि. हरपिनले मंचमा गएर त्यस पिण्डलाई हातमा लिएर हेर्नुभयो र त्यसलाई फलामको रूपमा पाउनुभयो ।

पाँच मिनेटसम्म वैज्ञानिकहरूले मंचमै ती दुवै धातुको परीक्षण गरे र प्रसिद्ध अणु वैज्ञानिक विलियम म्हेरले ती दुई वस्तु शुद्ध सुन र शुद्ध फलाम भएको घोषणा गर्नुभयो।

जेफर्सन हल तालीको गड्गडाहटले गुन्जायमान भयो। प्रयोगको पर्दाफास गर्न बनेको विशेषज्ञहरूको टोलीका सबैले मंचमा गएर गुरुदेवको प्रशंसा गरे र सबैले पालैपालो उहाँसँग हात मिलाए । गुरुदेवले सबैप्रति कृतज्ञता ज्ञापन गर्नुभयो ।

मि. ब्राउनले अति विशिष्ट व्यक्तिहरूलाई दिइने 'नगरको साँचो' गुरुदेवलाई दिनुभयो जुन अमेरिकामा भारतीयलाई पहिलोपटक दिइएको सम्मान थियो। सारा वातावरण आश्चर्ययुक्त भयो ।

जब गुरुदेव हल बाहिर निस्कनुभयो, त्यहाँ हजारौं हजारको भीड जम्मा भइसकेको थियो । त्ख च्यानलहरू हेरेर बसेका मानिसहरू त्यहाँ पुगिसकेका थिए र नारा लगाइरहेका थिए– 'We want Shrimaliji".

आइन्सटाइनले आफ्नो पुस्तक 'आइन्सटाइन पेपरुमा लेखेका छन्– 'मलाई लाग्छ कि मेरो मृत्यु धेरै निकट छ । यदि मलाई २, ४ साल अरू मिल्यो भने म भारतवर्ष गएर ती ऋषि वा संन्यासीको चरणमा बसेर त्यस क्रियालाई सिक्न चाहन्छु जसको माध्यमबाट एक अणुलाई अर्को अणुमा परिर्वत गर्न सकिन्छ ।'

स्वर्ण प्रक्रिया वा सूर्यविज्ञानका प्रवर्तक भगवान् शिव हुनुहुन्छ जो वैदिककालमा रुद्र नामबाट विख्यात हुनुभयो । उहाँले 'रुद्रयामल तंत्र'मा स्पष्टरूपमा सूर्यविज्ञानको व्याख्या गर्नुभएको छ ।

सूर्य सिद्धान्तले भन्दछ कि यस संसारमा प्रत्येक वस्तु अणुबाट निर्मित छन् । कुनै वस्तुमा अणु धेरै हुन्छन्, जस्तै, ठोस वस्तुमा, कुनैमा कम वा टाढा टाढा हुन्छन् जस्तै तरल पदार्थमा । यी अणुहरूको संख्या परिवर्तन गरेर वस्तु परिवर्तन गर्न सकिन्छ, किनकि सबै अणु एकसमान् छन् । जस्तै गुलाबको फूलमा २२ अणु हुन्छन्, काठको टुक्रामा ४७ अणु हुन्छन्, यदि गुलाबको फूलमा अणुको संख्या बढाएर २२ बाट ४७ गर्न सकियो भने त्यो फूल काठको टुक्रामा परिवर्तन हुन्छ । २२-५-८७ र २७-५-८७ मा गुरुदेवले सूर्य सिद्धान्त साधना शिविर पनि सम्पन्न गराउनुभएको थियो र उक्त अवसरमा एउटा साधिकाको कपालमा लगाउने कांटालाई सुनमा परिवर्तन गर्नुभएको थियो ।

## रत्नविज्ञान

मनुष्यको जीवनमा ग्रह नक्षत्रको अकाट्य प्रभाव पर्दछ । ग्रहको किरणको सन्तुलनबाट व्यक्ति सुखी र स्वस्थ रहन्छ भने सन्तुलन बिग्रिएको अवस्थामा व्यक्ति संकटग्रस्त र बिरामी बन्दछ । यस्तो अवस्थामा रत्नको माध्यमबाट न्यून किरणहरूको पूर्ति भएमा संतुलन कायम हुन्छ र व्यक्ति स्वस्थ र सुखी बन्न सक्दछ । तसर्थ रत्न विज्ञानको माध्यमबाट व्यक्तिको भाग्य बदल्न सकिन्छ । संसारमा चौरासी रत्नहरू विख्यात छन् जसमध्ये नौरत्न (नवरत्न) सर्वाधिक महत्त्वपूर्ण छन् । चौरासी रत्नहरू शरीरमा उत्पन्न हुने १६८ रोगहरूको औषधी बन्न सक्दछन् ।

परापूर्वकालदेखि प्रचलनमा रहेको यस विज्ञानसम्बन्धी सही ज्ञानको अभाव आधुनिक समयमा देखिन थाल्यो । यस्तो समयमा गुरुदेवले त्यस क्षेत्रमा काम गरेर यससम्बन्धी सही ज्ञानको व्याख्या गर्नुभएको छ । विभिन्न रत्नहरूको विभिन्न गुणहरू र तीनका समुचित प्रयोगलाई उहाँले प्रष्ट्याउनु भएको छ। विभिन्न पद्धतिबाट रत्नहरूको उपयोग र प्रयोगको बाटो उहाँले प्रशस्त गर्नुभएको छ। त्यस्तै विभिन्न रत्नहरूको भस्म (धूलो) बाट विभिन्न रोगहरूको उपचार गर्ने रत्न चिकित्सा पद्धतिको पनि व्याख्या गर्नुभएको छ। कुन रोगमा कुन रत्न भस्म प्रयोग गर्ने, कति मात्रामा गर्ने, के के मिसाउने, कसरी प्रयोग गर्ने यी सम्पूर्ण कुराहरूको उहाँमा असाधारण ज्ञान थियो । आफ्नो अवतरणकालमा उहाँले रत्न धारण र रत्न भस्मको प्रयोगबाट धेरै मानिसहरूलाई लाभान्वित बनाउनुभएको थियो । मूलभूतरूपमा उहाँले रत्नहरूलाई पञ्चतत्त्वसँग सम्बन्धित गरेर शरीरको तात्त्विक सन्तुलन कायम गर्ने मार्ग प्रशस्त गर्नुभएको छ ।

गुरुदेवले लेख्नुभएको छ– पूर्वीय ज्योतिष पद्धतिअनुसार मुख्य ग्रह सात छन् र तिनले निरन्तर मानवलाई संचालित गर्दछन् । यी ग्रह हुन्– सूर्य, चन्द्रमा, मंगल, बुध, वृहस्पति, शुक्र र शनि । राहु र केतु दुई यस्ता छायाँ ग्रह हुन् जसको प्रत्यक्ष अप्रत्यक्ष प्रभाव हाम्रो जीानमा देख्न सकिन्छ। यसका अतिरिक्त पाश्चात्य ज्योतिर्विद्हरूले हर्सल, प्लुटो र नेप्च्युन यी तीन ग्रहहरूको नवीन खोजी गरेका छन् । तर यिनीहरूको गति यति ढिलो छ कि मानवजीवनमा यिनको प्रभाव स्पष्ट देख्न सकिँदैन । वस्तुतः नौ ग्रहहरू छन् र तिनमा पनि मुख्य सात ग्रहहरूले मानवजीवनका बाह्य र आन्तरिक व्यक्तित्वको

संचालन गर्दछन् ।

शारीरिक स्वस्थताका लागि खाद्य, जल, लवण, भिटामिन आदि उचित अनुपातमा शरीरमा हुनु आवश्यक भएझैं मानवजीवनमा श्रेष्ठता र सफलताको लागि ग्रहहरूको उचित प्रतिनिधित्व आवश्यक हुन्छ किनकि प्रत्येक ग्रहले जीवनमा कुनै मुख्य आयामको प्रतिनिधित्व गर्दछ । त्यसैले एक मात्र ग्रहको दुर्बलता पनि मानवजीवनको अपूर्णता हुन्छ । यस्तो स्थितिमा दुर्बल ग्रहको पुष्टताको लागि त्यो ग्रहसँग सम्बन्धित धातु एवं रत्न धारण गरिन्छ । वैज्ञानिक रूपबाट यसको तात्पर्य यस्तो हुन्छ कि एक विशिष्ट रत्नबाट एक विशिष्ट ग्रहका किरणहरूलाई लिने (absorb) प्रबल शक्ति हुन्छ । जसरी एक पदार्थबाट अर्को पदार्थमा विद्युत प्रवाहित गर्न सकिन्छ, त्यस्तै प्रकारले त्यो रत्न ती विशेष किरणहरूलाई लिएर (absorb) मानवशरीरमा प्रवाहित गरिदिन्छ। यसबाट कमजोर ग्रहको सन्तुलन भएर मानवजीवन सुखी र आनन्दमय बन्दछ ।

गुरुदेवले ग्रहसम्बन्धी यी सबै तथ्यहरू बुझाउनु भएर प्रत्येक ग्रहबाट मानिसमा हुने आन्तरिक तथा बाह्य प्रभाव, ग्रहसम्बन्धी धातु र रत्नको विवरण, राशिसम्बन्धी रत्न, उपरत्नहरू, महिनासम्बन्धी रत्नहरूको जानकारी दिनुभएको छ । त्यस्तै रत्नहरूको गुण, रत्न चिन्ने, परीक्षा लिने तरीका, रत्नको प्रभाव दोष, रत्नका उपरत्नहरू, कस्ता व्यक्तिले कुन रत्न धारण गर्ने, कुन रोगमा कुन रत्न धारण गर्ने, कसरी धारण गर्ने आदि कुराहरूलाई बुझाउनु भएको छ ।

रत्नहरूको प्रयोगबाट मानवजीवनमा आउने धेरै समस्याको समाधान गर्दै भावी समस्याहरूलाई रोक्दै जीवन सुखमय बनाउन उहाँले महत्त्वपूर्ण योगदान दिनुभएको छ। यससम्बन्धी उहाँद्वारा रचित पुस्तक हो– रत्न ज्योतिष ।

# हार्दिक आमन्त्रण !

## श्री शिव गोरक्षा महोत्सव

**परमपूज्य सद्गुरुदेवहरूको कृपा, आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्रले श्रावण महिनालाई श्री शिव गोरक्ष महोत्सवको रूपमा मनाउँदै आइरहेको सर्वविदित नै छ । यसै सन्दर्भमा आगामी श्रावण महिनालाई विविध कार्यक्रमसहित श्री शिव गोरक्ष महोत्सवको रूपमा मनाइने भएकोले निम्न कार्यक्रमहरूमा पाल्नुहुन हार्दिक आमन्त्रण गर्दछौं ।**

**श्रावण ७ गते सोमबार–**
मृगस्थली गोरक्षपीठमा हवन (बिहान ८–९ बजे)

**श्रावण १४ गते सोमबार–**
वनकालीको गोरखनाथ मन्दिरमा हवन (बिहान ८–९ बजे)

**श्रावण २१ गते सोमबार–**
थापाथलीको गोरखनाथ मन्दिरमा हवन (बिहान ८–९ बजे)

**श्रावण २८ गते सोमबार–**
काष्ठमण्डपको गोरखनाथ मन्दिरमा हवन (बिहान ८–९ बजे)

**गुरुकृपा वर्षिरहोस्, खुदी आश्रम फलोस् फुलोस्**
**सद्गुरुको आशीर्वाद सधैं भइरहोस् ।**
परमपूज्य सद्गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ एवं
परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको कृपा, अनुकम्पास्वरूप
कास्की, लेखनाथ-१२ खुदीमा गुरु आश्रम भवन निर्माण गर्न सफल भएकोमा
यस पुनीत कार्यमा सहयोग गर्ने सम्पूर्णलाई हार्दिक धन्यवाद दिंदै आश्रमको उत्तरोत्तर प्रगतिको कामना गर्दछौं ।

**कैलाश सुब्बा तथा सम्पर्क कार्यालय ललितपुर**

**गुरु कृपा वर्षिरहोस्, खुदी आश्रम फलोस् फुलोस्**
**सद्गुरुको आशीर्वाद सधैं भइरहोस् ।**
परमपूज्य सद्गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ एवं
परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको कृपा, अनुकम्पास्वरूप
कास्की, लेखनाथ-१२ खुदीमा गुरु आश्रम भवन निर्माण गर्न सफल भएकोमा यस पुनीत कार्यमा सहयोग गर्ने
सम्पूर्णलाई हार्दिक धन्यवाद दिंदै आश्रमको उत्तरोत्तर प्रगतिको कामना गर्दछौं ।

**मदनकुमार श्रेष्ठ तथा सम्पर्क कार्यालय बानेश्वर**

**गुरुकृपा वर्षिरहोस्, खुदी आश्रम फलोस् फुलोस्**
**सद्गुरुको आशीर्वाद सधैं भइरहोस् ।**
परमपूज्य सद्गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ
एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको कृपा, अनुकम्पास्वरूप
कास्की, लेखनाथ-१२ खुदीमा गुरु आश्रम भवन निर्माण गर्न सफल भएकोमा यस पुनीत कार्यमा सहयोग गर्ने
सम्पूर्णलाई हार्दिक धन्यवाद दिंदै आश्रमको उत्तरोत्तर प्रगतिको कामना गर्दछौं ।

**दिनकुमार के.सी. तथा सम्पर्क कार्यालय तीनकुने**

**गुरुकृपा वर्षिरहोस्, खुदी आश्रम फलोस् फुलोस्**
**सद्गुरुको आशीर्वाद सधैं भइरहोस् ।**
परमपूज्य सद्गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ एवं
परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको कृपा, अनुकम्पास्वरूप
कास्की, लेखनाथ-१२ खुदीमा गुरु आश्रम भवन निर्माण गर्न सफल भएकोमा यस पुनीत कार्यमा सहयोग गर्ने
सम्पूर्णलाई हार्दिक धन्यवाद दिंदै आश्रमको उत्तरोत्तर प्रगतिको कामना गर्दछौं ।

**दशरथ थापा तथा सम्पर्क कार्यालय भक्तपुर**

# अनुभव अनुभूतिका खातैखात

अनुभव-अनुभूति भन्ने कुरा जस्ताको तस्तै सबै भन्न पनि नमिल्ने, नभनी पनि नहुने, नभन्दा आफूलाई गाह्रो, भन्दा अरूलाई अप्ठ्यारो पर्न पनि सक्ने हुनाले मैले संक्षिप्त र सांकेतिकरूपमा अनुभवहरू बताउने गरेको छु । भावार्थ मात्र बताउने प्रयास भएको छ यहाँ पनि ।

२०६१ सालको कुरा हो । भर्खर भर्खर मात्रै तेस्रो चरणको प्रशिक्षण सिद्धाश्रम शक्ति केन्द्र नेपाल (काठमाडौं) बाट लिएर घर फर्केपछि ममा छुट्टै आध्यात्मिक र साधनात्मक जोश, जाँगर, तन्मयता, लगनशीलता, स्फूर्ति र गुरुभक्ति बढेको थियो । बिहान बेलुका पूजापाठ, आरती निकै श्रद्धा र भक्तिपूर्वक सम्पन्न गर्थें म ।

तर त्यतिखेर गाउँ घरमा ज्यानै लिन खोज्ने पनि थिए र ज्यानै दिन खोज्ने पनि थिए । आफूले चाहेर पाएदेखि मेरो जागिर नै खान खोज्ने पनि थिए र जोगाई दिन खोज्ने पनि भए । मान्छेको स्वार्थी प्रवृत्ति, डाडे बानी देख्दा दिक्क लागेर जागिर छोड्ने विचार मनमा आयो । जागिर छोड्ने विचारले म सदरमुकाम (बेसी शहर) झरेको थिएँ । तर शिक्षा कार्यालयबाट ठूलो भरोसा र आश्वासन मिलेकाले राजिनामा दिइँन जागिरबाट मैले । कुसे औंसीको दिन थियो त्यो । दिउँसोको खाजा र बेलुकाको खाना त्यति शुद्ध सात्विक पनि थिएन । आफ्नै गाउँतिर माइती भएको गुरुङसेनी दिदीको होटलमा बास बसेकाले वरपरको वातावरणमा तामसी गुणको प्रभाव थियो । सुत्ने बेलामा पनि मनमा धेरै कुरा खेलाएको थिएँ । म बिहान ठीक पाँच बजे बिउँझे पनि ओछ्यानमा नै निच मारेर पल्टिरहें । तर अकस्मात मैले मेरो गाउँ (बाहुनडाँडा) को स्थानीय विद्यालयका दुईजना शिक्षक साथीहरूबीच मेरो, मेरो परिवार र मेरा इष्टमित्रको विषयमा कुराकानी भएको प्रत्यक्ष सुनें । दुई जना सहयात्री साथीबीच भएको कुराकानी मेरो जागिर, मेरो छोराको पढाइ र मेरा प्रिय आफन्तको विषयमा भएको थियो । रहस्यमय, षडयन्त्रपूर्ण योजना तथा साथीहरूको हामीमाथिको धारणा प्रत्यक्षरूपमा बुझ्ने मौका पाएँ त्यो क्षण । म गाउँबाट २० किमि टाढा दक्षिणतर्फ रहेको सदरमुकामको होटलको कोठाभित्र थिएँ । तर कुराकानी नजिकै भएको भान हुन्थ्यो मलाई । कुराकानी हुँदा साथीहरूको स्वर प्रत्यक्ष सुनेको थिएँ । सपना वा तन्द्रा पो हो कि भनेर म उठेर बसें । तर म राम्ररी बिउँझेको हुँदा विपना थियो त्यो । मलाई पहिलोपटक साह्रै अचम्म लाग्यो । साथीहरूको कुराकानी सुनेर सावधान हुने मौका समेत पाएँ मैले । पदलोलुपता, स्वार्थीपन, अमानवीय र अन्यायी प्रवृत्तिबारे नबुझेको पनि थिइन मैले । तर प्रत्यक्ष मुखैले बोलेको सुन्ने मौका पाएँ आज । सोही दिन बेलुका घर पुगेर श्रीमतीसँग बुझ्दा ती साथीहरूको कामको सिलसिलामा बिहान पाँच बजेतिर भेट भएकै रहेछ । यस घटनाले र साथीहरूको आफूहरूप्रतिको धारणा प्रत्यक्षरूपमा सुन्ने मौका पाउँदा मानव स्वभाव र जीवनको सार्थकताबारे राम्ररी बुझ्ने, चिन्तन गर्ने मौका पाएँ । तर मैले घरमा आएर श्रीमतीबाहेक अरूसँग यी कुरा भनिन । जे सुने पनि, जस्तो लागे पनि हामीले सह्यौं, प्रतिक्रिया जनाएनौं ।

मलाई 'दूर श्रवण सिद्धि' पाएछु भन्ने लाग्यो । त्यसपछि त लगातार मेरो, हाम्रो परिवार, आफन्तहरूको बारेमा भएका राम्रा नराम्रा चर्चा परिचर्चा, निन्दा, कुराकानी घरमा, विद्यालयमा, बाटोमा सुन्दथें म भित्री कानले । सुनेर कतिपय नराम्रा बानी पनि सुधारें मैले । सदैव शत्रुहरूबाट सावधान रहन सक्ने भएँ । गुरु र इष्टप्रति श्रद्धाभक्ति निकै बढ्दै गयो । साथी वा कसैले मनमनै भनेका, सोचेका कुरा पनि एकै स्वरमा सुन्दथें म, जुन कुनै श्लील हुन्थे कुनै त अश्लील पनि हुन्थे, छक्क पर्थे म ।

ममा योग चढेपछि ज्ञान बढ्थ्यो । अरूले मनमनै र टाढाबाट बोलेका कुरा पनि भित्री कानले हुबहु सुन्दथें म । दुईचार वर्षपछि यो क्रम घट्दै गयो । अचेल पनि यदाकदा अरूले मनमनै बोलेको, टाढाबाट बोलेको मधुरो स्वरमा, अस्पष्टरूपमा अलिअलि सुन्दछु म ।

साथै अर्को कसैले मसँग प्रसन्नतापूर्वक हाँस्यो, बोल्यो भने त्यो व्यक्तिको अनुहारको तेज, चमक र सौन्दर्य बढेको थाहा पाएछन् मानिसहरूले । त्यसपछि मलाई जबर्जस्ती हँसाउन खोज्ने, नबोल्नेहरू पनि बोल्न थालेको अनुभव भएपछि म सावधान बन्न थालें । म अति नै प्रसन्न भएर उन्मुक्त रूपमा हाँस्दा (मुस्काउँदा), मसित हाँसेर बोल्ने, अगाडि पर्ने युवा, युवती वा जोसुकै व्यक्तिको पनि सौन्दर्य बढ्दो रहेछ, म अप्रसन्न हुँदा घट्ने रहेछ भन्ने थाहा भयो । अनन्य गुरुभक्ति र इष्टकृपाको प्रतिफल हो भन्ने कुरा मैले स्पष्टरूपमा बुझें । दुईचार वर्षपछि यो सामर्थ्य विस्तारै कम हुँदै गयो ।

त्यतिबेला मेरो जागिरमाथि रीस गर्ने प्रिय आफन्तहरूको व्यवहारबाट म हैरान भएको थिएँ । तर अकस्मात ममा योग चढ्न थाल्यो र कक्षामा धारा प्रवाहरूपमा पहिलेको भन्दा अझै प्रभावकारी ढंगले अध्यापन गर्न सक्ने क्षमता ममा वृद्धि भयो । हुन त म दक्ष र अनुभवी शिक्षक थिएँ । तर अस्वाभाविकरूपमा क्षमतामा भएको वृद्धिले ममा 'वाकसिद्धि' थियो त्यतिबेला भन्ने अनुभव भयो । टाढा टाढासम्मका अभिभावकहरूले समेत घरैमा बसेर मैले कक्षा कोठामा पढाएको समेत हुबहु सुनेछन्, पछि मसँग कुराकानी हुँदा म पनि छक्क परें, कसरी सम्भव भयो यो कुरा भनेर । विद्यार्थीहरू मन्त्रमुग्ध बनेर पढाएका कुरा चाख लिई लिई सुन्ने गर्थे । ममा आएको परिवर्तन देखेर कुनै कुनै विद्यार्थीहरू साह्रै विस्मित समेत भएका रहेछन् । कुनै कुनै साथी मलाई 'सुतेको सिंह' भनेर जिस्क्याउने समेत गर्थे ।

तिनताका जब म मानसिक जप गर्थें, गुरु र इष्ट स्मरण गर्थे तर ममा योग चढेको, ज्ञान बढेको, क्षमता बढेको अनुभव गर्थें, कहिल्यै नबुझेका रहस्य बुझ्थें, कहिल्यै थाहा नपाएका तथ्य थाहा पाउँथे, कहिल्यै नजानेका कुरा बुझ्थें, जान्दथें अरूलाई पनि बुझाउन सक्थें ।

अनि कसैले मप्रति, हाम्रो परिवारप्रति दुर्भाव राखेर मट्टीतेल, हतियार प्रयोग गर्ने विचार मनमा लिँदैमा मेरो नाकमा गन्ध आउँथ्यो, मेरो आँखामा स्पष्ट छवि देखा पर्थ्यो । अनि मैले गुरु स्मरण गरी सावधान हुने मौका पाउँथें । शत्रुहरूको षडयन्त्र कहिल्यै सफल हुन सकेन । माओवादीको झूठो आरोप लगाएर निर्दोष मान्छेलाई दुःख दिन खोज्नेहरूको सपना पनि कहिल्यै साकार हुन सकेन । आफैं सजायँका भागी हुन पुगे । यो सबै गुरुकृपाको प्रतिफल थियो भन्ने मैले बुझेको थिएँ ।

सरल स्वभावकी सामान्य साक्षर मात्रै भए पनि उच्च संस्कार युक्त परिवारमा जन्मे हुर्केकीले मेरी श्रीमती (शान्तिदेवी) पनि निकै भक्तिमती थिइन् । गुरु दीक्षा नलिएकी भए पनि गुरु चादरमा लेखेको गुरुमन्त्र पढेर जप गर्ने अनुमति उनले मसित मागेकी थिइन् । बेला बेलामा सपनामा सद्‌गुरुदेव (डा. नारायण दत्त श्रीमाली) ज्यूको दर्शन पाएर मलाई समेत सजग र सचेत गराउँथिन् उनी । म लापर्वाह र मनोमानी ढंगमा चल्न रुचाउने साधक थिएँ । त्यसैले उनीमार्फत् गुरुदेवले मलाई सावधान गराउनु हुँदैछ भन्ने लाग्थ्यो ।

मेरी श्रीमतीलाई पाठे घरको रोगले दुःख दिएको, टाढा गएर ठूलो अस्पतालमा ठूला डाक्टरहरूबाट उपचार गराउनु पर्ने नत्र क्यान्सर हुन सक्ने सुझाव स्थानीय आयुर्वेदिक औषधालयका कविराजहरूले दिनुभएको थियो । तर गुरुदेवप्रति अनन्य भक्तिभाव र आयुर्वेदिक (धूलो मूलो) औषधी सेवन गर्दागर्दै असाध्य रोग सन्चो हुँदै गयो । गुरुदेवप्रतिको आस्था र भक्ति बढी भएकै कारण एक वर्ष विदेश अष्ट्रेलिया बस्ने अवसर समेत उनले पाइन् । गुरुकृपाकै कारण न त विदेशमा श्रीमती र छोरीज्याइँ, नातिनीहरूलाई, न त यहाँ हामीलाई नै कुनै रोग लाग्यो, न त कुनै अप्ठ्यारो, न त कुनै समस्या नै पर्‍यो ।

पुरानो घर र टोलबाट बसाइँ सरी नयाँ घर र तल्लो गाउँ झरेको एक वर्ष नबित्दै राति बाहिर पिसाब फेर्न निस्कँदा मेरो भूत (लौरो टेक्ने) सँग भेट भयो । अनि प्रौढ कक्षा पढेर साथीहरूसँग फर्कंदा घर नजिकैको धारोमा सेतो घोडासँग जम्का भेट भयो मेरी श्रीमतीको । घोडा बारीमा पस्यो भनी धपाउन जाँदा त्यो (सेतो घोडा) बारीमा हरायो । अलप भएपछि भूत रहेछ भन्ने थाहा भयो । मैले र मेरी श्रीमतीले पनि तुरुन्त मनमनै गुरुमन्त्र जप गरेकाले भूतको असर हामीलाई परेन (यो घटना २०५२ तिरको हो) ।

जस जसले जति रीस गरे पनि मेरो गुरुभक्ति र तपोबलको कारण कसैले केही गर्न सकेन । गल्ती महसुस गरी कतिले क्षमायाचना समेत गरे । तर अध्यापन र प्रशासनिक झन्झटको कारण गुरुभक्ति, साधनात्मक तन्मयता, जप, तपमा कमी आएर होला, सिद्धि र चमत्कार विस्तारै कम हुँदै गए । तर उही विद्यालयमा म ३४ वर्षसम्म स्थायी शिक्षणमा सेवारत रहन सकें, अन्तिममा उच्च माविको प्रथम (संस्थापक) प्राचार्य बन्ने मौका गुरुदेव र ईश्वरभक्तिकै कारण मलाई मिल्यो । दुई दुईपटक प्राचार्य भएपछि प्रशासनिक झन्झटले मैले साधना, जप, तपमा समय दिन नसक्दा र साथीहरूको व्यवहार देख्दा दिक्क लागेर सेवा निवृत्त भई गाउँ छोडेर म काठमाडौंमा नै बसेर गुरु कार्य गर्दैछु, गर्ने मौकाको खोजमा छु । मेरा चारमध्ये यहाँ भएका तीनवटै छोराछोरीहरू जे जे विषय पढेका भए पनि गुरु दीक्षा लिएर जप, ध्यान समेत गर्दैछन् । गत असार १५ गते पूज्य अरविन्द गुरुदेवसँग दीक्षा समेत लिइन् मेरी श्रीमतीले । उनी त हामी सबैभन्दा भक्तिमती र श्रद्धावान् छिन् ।

खासमा भन्नु पर्दा सिद्धि र सामर्थ्य पुण्य, स्वर्ग र भोग, रहस्य र चमत्कार व्याट्री चार्ज गरिरहनु परे झैं क्षणिक रहेछन् । कहिले घट्ने, कहिले बढ्ने । बारम्बार तपस्यारूपी व्याट्री चार्ज गरिरहनु पर्ने, चार्ज सकिने बित्तिकै सिद्धि-शक्ति-सामर्थ्य र चमत्कारमा गतिरोध आइहाल्ने, स्वीच अफ भई हाल्ने रहेछ । बरु सिद्धि र चमत्कारभन्दा परमात्मा दर्शन र मोक्षलाभ ठूलो र स्थायी उपलब्धि रहेछ भन्ने आश्रममा एक वर्षसम्म आउँदा, गुरुकार्य गर्दा बुझेको छु मैले । मेरो विचार र मान्यतामा विस्तारै परिवर्तन आएको पाएको छु । मैले । सिद्धि र चमत्कारको लोभभन्दा मोक्षलाभ र परमेश्वरको दर्शनको तीव्र इच्छा हुन थालेको छ । गुरुभक्ति, निश्चल-आत्मिक प्रेम, साधनात्मक तन्मयता, शास्त्रीय मान्यताहरूको विश्लेषणबाट नै स्थायी सुख, शान्ति, ज्ञान, मुक्ति र परमात्माको दर्शन मिल्ने कुरा निर्विवाद रहेछ ।

जय गुरुदेव !

–रामचन्द्र न्यौपाने
लमजुङ, बाहुनडाँडा ।

*(प्रस्तुत राशिफल सूर्य सिद्धान्तमा आधारित छ । राशिफल लेखक अधिकारीज्यूको सगरमाथा टेलिभिजनमा हरेक दिन बिहान ६:०० देखि ७:०० बजेसम्म कार्यक्रम 'ग्रहफलु प्रत्यक्ष प्रशारण हुन्छ ।)*

–ज्यो. हरिओम अधिकारी
*'ज्योतिष भाष्कर'*

**मेष** (चू, चे, चो, ला, ली, लु, ले, लो, अ):
पराक्रम बढेर जानेछ, दाजुभाइको सहयोग प्राप्त हुनेछ । मन भने दुविधाग्रस्त रहनेछ । दाम्पत्यमा विवाद चर्किएला । विदेश जाने अवसर मिल्ने देखिन्छ । १ र ८ अंक शुभ, बिजोडीबार शुभ, रातो र कलेजी रङ शुभ, पूर्व दक्षिण फाप्नेछ ।

**वृष** (ई, उ, ए, ओ, वा, वी, वु, वे, वो):
शत्रुनाश हुनेछ, सरकारी कार्य बन्नेछन्, मानसिक चिन्ता बढ्नेछ । साहसिक कार्यबाट मान-सम्मान मिल्नेछ, व्यापार व्यवसायबाट राम्रो आम्दानी हुनेछ । २ र ६ अंक शुभ, जोडीबार शुभ, खरानी र सेतो रङ शुभ, दक्षिण र पश्चिम शुभ रहनेछ ।

**मिथुन** (क, की, कु, ध, ङ, छ, के, को, ह):
सरकारी जागिर मिल्ने सम्भावना छ । दाम्पत्य सुखको योग पनि देखिन्छ । व्यापारमा धन लगानी बढेर जानेछ । परीक्षा प्रतियोगितामा सफलता मिल्नेछ । ३ र ६ अंक शुभ, बिजोडीबार शुभ, हरियो, निलो रङ शुभ, उत्तर पश्चिमको यात्रा शुभ रहनेछ ।

**कर्कट** (ही, हु, हे, हो, डा, डी, डु, डे, डो):
वस्त्र लाभ, मिष्ठान्न भोजन प्राप्ति, विदेशबाट धनलाभ हुने, घर झगडाको योग, पशु चौपायाबाट धनलाभ मिल्ने, जागिरमा स्थान परिवर्तन हुनेछ । २ र ४ अंक शुभ, जोडीबार शुभ, खरानी र सेतो शुभ रङ, उत्तर पूर्वको यात्रा हुनेछ ।

**सिंह** (मा, मि, मु, मे, मो, टा, टि, टु, टे):
व्यापार व्यवसायबाट धनलाभ हुने, जागिरमा पदोन्नति, झैझमेलाबाट मुक्ति मिल्ने, पारिवारीक झगडा र कलह भने रहने देखिन्छ । ३ र ५ शुभ अंक, बिजोडीबार शुभ, रातो र कलेजी रङ शुभ, पूर्व पश्चिमको शुभ यात्रा ।

**कन्या** (टो, पा, पी, पु, ष, ण, ठ, पे, पो):
पेटको समस्याले आलस्यता थप्नेछ, धन-सम्पत्तिमा विवाद खेप्नु पर्ला, अदालतीय झमेलामा परिने सम्भावना रहेको छ, व्यापार बढेर जानेछ, जागिरमा स्थान परिवर्तन होला । ५ र ७ शुभ अंक, बिजोडीबार शुभ, निलो हरियो रङ शुभ, पश्चिम र उत्तरको शुभ यात्रा ।

**तुला** (रा, रि, रु, रे, रो, ता, ति, तु, ते):
शिरमा शनि र राहुको गोचरीय दशाले काम कारोवारमा शिथिलता, दाम्पत्यमा विवाद, घमण्ड वृद्धि, स्वास्थ्यमा बाधा, जागिरमा विवाद रहेता पनि व्यापारबाट राम्रै आम्दानी हुने देखिन्छ । २ र ८ शुभ अंक, जोडीबार शुभ, खरानी र सेतो शुभ रङ, दक्षिण पूर्वको शुभ यात्रा ।

**वृश्चिक** (तो, ना, नि, नु, ने, नो, या, यि, यु):
अचानक हानि हुन सक्ला, आँखा र शीरपीडाले सताउला, घमण्ड पनि बढ्नेछ, वैदेशिक कार्य बन्नेछन्, आर्थिक लाभ प्राप्त हुनेछ, जागिरमा पदोन्नति, शैक्षिक प्रगति हुनेछ । ४ र ८ शुभ अंक, बिजोडीबार शुभ, रातो र कलेजी शुभ रङ, दक्षिण पश्चिमको शुभ यात्रा ।

**धनु** (ये, यो, भा, भी, भु, ध, फ, ढा, भे):
सरकारी कार्यमा बाधा पर्ने, विदेश जाने अवसर मिल्ने, व्यापारमा राम्रो सफलता मिल्ने, शिक्षामा उन्नति, स्वास्थ्यमा भने समस्या देखिनेछ । ७ र ९ अंक शुभ, बिजोडीबार शुभ, पहेँलो, रातो रङ शुभ, उत्तर पश्चिमको शुभ यात्रा ।

**मकर** (भो, जा, जी, जु, जे, जो, ख, खि, खु, खे, गा, गि):
दाम्पत्यमा विवाद पर्ला, अदालतीय झैझमेला पर्ने योग छ । वैदेशिक व्यापार बढेर जानेछ । शत्रुले दुःख दिनेछन्, स्वास्थ्यमा खर्च गर्नुपर्ला । ७ र ९ शुभ अंक, बिजोडीबार शुभ, निलो, कालो शुभ रङ, दक्षिण र पश्चिमको शुभ यात्रा ।

**कुम्भ** (गू, गे, गो, सा, सी, सु, से, सो, दा):
शीरपीडा, मानसिक पीडा, धन खर्च, आफन्तसँग मनमुटाव, दाम्पत्यमा विवाद, नोकरीमा असफलता, शिक्षामा उन्नति, आर्थिक हानि हुनेछ । बिजोडी अंक, बिजोडीबार, रातो, निलो रङ शुभ, पश्चिम दक्षिणको यात्रा शुभ ।

**मीन** (दी, दु, थ, झ, ञ, दे, दो, च, ची):
परीक्षा प्रतियोगितामा सफलता मिल्ने, सन्तानको चिन्ता रहने, स्वास्थ्यमा समस्या देखिने, व्यापार बढेर जानेछ, शैक्षिक उन्नति हुने देखिन्छ । ३ र ५ अंक शुभ, बिजोडीबार शुभ, पहेँलो र पिंक कलर शुभ, उत्तर पश्चिमको शुभयात्रा ।
अस्तु । शुभम् ।

# तन्त्र-परिचय-४

–योगी नित्यानन्द

अब तत्त्वाध्वाको वर्णन गरिन्छ । सर्वप्रथम तत्त्व भनेको के हो तननं तत् संपादित्वात् अर्थात् जसबाट सम्पादन हुन्छ अर्थात् बन्दछ, अक्षरहरूको परस्पर स्पन्द र मात्राहरूको मेलबाट अनन्त तत्त्वहरू बने, ती अनन्त हुनाले बीजाक्षर तथा कूटाक्षरबाहेक अरू सबै तत्त्वहरूको नाम त्यै त्यै अक्षर हुन गएको छ । प्राय: बीजाक्षर तथा कूटाक्षरहरूको आफ्नो आफ्नो नाम छ । तत्त्वहरूको पनि त्यै नाम छ । तत्त्वहरूको बारेमा 'शिवस्वरोदय' भन्छ– तत्त्वाद् ब्रह्माण्डमुत्पन्नं तत्त्वेन परिवर्तते । तत्त्वे विलीयते देवि तत्वाद् ब्रह्माण्डनिर्णय: ॥ अर्थ:- तत्त्वबाटै ब्रह्माण्ड बन्यो, तत्त्वले परिवर्तन हुन्छ, फेरि तत्त्वमै विलीन हुन्छ । त्यसकारण ब्रह्माण्डको निर्णय तत्त्वबाटै हुन्छ । कामकलाको सारस्वरूप कामकलाबाट उत्पन्न स:तत्त्व (संवित्) हार्द्धकलाको (ह को) तत्त्वमा मिलेर 'हस:' बन्छ, त्यसमा "औ" तत्त्व मिलेर नाद विन्दुको संयोग हुँदा श्रीप्रासाद बीज उत्पन्न भयो । त्यसपछि मायाजालको सूक्ष्म छिद्रबाट चार आत्मा जम्मा भएको नाभिकरणमा पर्दा क्यामेराले फोटो खिचे गरी उल्टिएर "स्हौ:" पराप्रासाद बीज उत्पन्न भयो, जसलाई प्रासादी तत्त्व पनि भनिन्छ । यिनै अक्षरहरूबाट तत्त्वहरू उत्पन्न भएकाले यी अक्षरहरूलाई 'मातृका' भनिन्छ । अनि प्रकाश 'अ'मा "स" तत्त्व मिल्दा "अस्" क्रियाको धातुरूप तत्त्व बन्यो । यही तत्त्वबाट मातृका-अक्षरहरूलाई आठ भाग लाई अष्टवर्ग अवर्ग (अ आ ई उ ऊ ऋ ॠ लृ ॡ ए ऐ ओ औ अं अ:) कवर्ग (क ख ग घ ङ) चवर्ग (च छ ज झ ञ) टवर्ग (ट ठ ड ढ ण) तवर्ग (त थ द ध न) पवर्ग (प फ ब भ म) यवर्ग (य र ल व) शवर्ग (श ष स ह) यति आठ वर्गका प्रथमाक्षर (अ क च ट प य श) प्रत्येक तत्त्वहरू मिल्दा आठै प्रकारका अलग अलग अष्टधातु बने । 'ल' तत्त्व र 'ड' तत्त्वमा दुईको ऐक्य हुँदा 'क' तत्त्व, क तथा ष तत्त्वको ऐक्य हुँदा संहारक 'क्ष' तत्त्व बने । यी दुई अक्षरको 'ल्ह' वर्ग समेत भई नववर्ग हुन्छन् । यी नववर्ग सबै तत्त्वहरूको ऐक्य भई (मिली) नवरत्न बने । यै कुरालाई संकेत गर्दै बृहद्वडवानल तन्त्रले अवर्गबाट माणिक, यवर्गबाट मोती, कवर्गबाट मुगा, चवर्गबाट पन्ना, टवर्गबाट पुखराज, तवर्गबाट हीरा, पवर्गबाट नीलम, शवर्गबाट गोमेद, लवर्गबाट वैदूर्य (लसूनी) बनेका हुन् भनी बताएको छ ।

यसैगरी सम्वित्को त्रिकोणको तीन रेखामा विमर्श 'हुले कलाद्वारा आफूबाहेक अरू ४८ अक्षरको तत्त्वलाई सोह्र सोह्र भागमा बाँडी आफ्नो तत्त्व प्रकाश 'अ'को मुखमा राखी त्रिकोणाकार 'अकथ' नामको जालरूप तत्त्व बन्न गयो । त्यसपछि प्रकाशमा उष्णतारूपी विमर्श प्रबल भई प्रकाश ज्यादै उज्यालो भयो । त्यै प्रकाशको रश्मि काँचरूप 'अकथ' तत्त्वमा परी बिन्दुहरूको कामकलात्मक नाभिकणमा पृथक् पृथक् तत्त्वहरू साथमा लिई भएको भ्रमणको हिसाबले बनेका अनन्त धातु रत्न अणु परमाणुहरूको ४ आत्मा जम्मा भई बनेको कणमा जम्मा हुन जाँदा बनेको पिण्डमा सूक्ष्म लक्षाघात पर्दा कालाग्निरुद्ररूप अग्नि सल्कियो । अनि घनीभूत वायुमण्डलमा पर्दा अग्नि दन्किन लाग्यो, अग्नि र तापको प्रभावले 'अकथ' तत्त्व पङ्खा घुमे जस्तो गरी घुम्दै यताउति सर्न थाल्यो, त्यस अवस्थामा माया (ह्रीं) को शक्तिमा 'ल' बीजको आभास परेपछि ह्लीं रूपशक्ति (आकर्षणशक्ति) बन्यो । त्यसबाट पिण्ड ढाकियो । 'ज' तत्त्वको आभास त्यस पिण्डमा परेर उताउति गर्दा 'ऊ' तत्त्व उत्पन्न भई 'ज' तत्त्वमा मिलेर 'जू' तत्त्वले पिण्डको बलेको पदार्थलाई द्रवरूप बनायो, त्यो आकर्षणशक्तिको प्रभावले उताउति सर्न सकेन । त्यसपछि प्रणवमा रहेको 'मूँ' तत्त्व यस द्रव्यरूप पदार्थमा जस्तैबाट पनि नगल्ने कठोर नाभिकण बनेर मण्डक-गतिले खेल्दा त्यसको नाम 'मण्डूक' हुन गयो । त्यसपछि सम्वित्बाट निर्मित 'स:' तत्त्वले कालाग्नि रुद्रलाई साम्य पारेर त्यसको उष्णता साथमा ग्रहण गरी आफूभित्र प्रवेश गरी बस्यो । त्यसपछि 'जू' तत्त्वमा नादबिन्दु मिली त्यसले बाहिरबाट दूधमा तर लागे जस्तै बाक्लो तर लाग्दा अघिको पिण्ड खँदिलो भई स्थूल पिण्ड बन्यो, आत्मतत्त्व प्रादुर्भाव भयो । त्यसपछि बिन्दुरूपमा प्रणवतत्त्व मिली वायवीयरूप अकथ चक्र बनी त्यो पिण्डलाई मिल्दो आकारमा ल्याउन घनले चुटे जस्तै आघात गर्दा फलामबाट झिल्का उठे झैं अनन्त झिल्का बन्दा अनन्त सूर्यहरू बने । यस स्थूल पिण्डको बाह्य तह भएर लागेको तर सेलाएपछि "जूँ" तत्त्व र "स:" तत्त्व प्रणव तत्त्वको पछाडि लागी लाहा पगालेको जस्तो वर्णको मधु (मह) जस्तै द्रवपदार्थ सोमरस (अमृत) बनी यस पिण्डलाई भिजाएर रह्यो । यसकारण यस पिण्डको सोम (विश्वसोम=नीहारिका) भयो ।

अनि 'ह'मा नादबिन्दु इन्द्रनील (वैजनी रङ) नील (नीर) तथा स्वर्ण ज्योत्स्ना समेत छिरबिरे (चित्र) रङको (सेतोमा माथिको तीन रङको) साना साना रहस्यहरू भएको वर्णको 'हं' तत्त्व, यमा नाद बिन्दुसहित हरित ज्योत्स्ना मिलेर वायु तत्त्वात्मक हरियो रङको 'युं तत्त्व, 'रुमा त्यसैगरी रक्त ज्योत्स्ना मिलेर तेजस्तत्त्वात्मक रातो रङको "रं" तत्त्व, "व" त्यसैगरी खवर्णको ज्योत्स्ना मिलेर जल तत्त्वात्मक नील रङको "वँ" तत्त्व, अनि 'ल'मा त्यसैगरी पीत ज्योत्स्ना मिलेर पृथ्वी तत्त्वात्मक पहेँलो रङको 'लं' तत्त्व बन्यो ।

यसरी बनेका पाँच तत्त्वहरूद्वारा पञ्चमहाभूत पृथ्वी, जल, तेज, वायु तथा आकाश स्पष्ट गर्ने काम भयो । यिनै पचास मातृकालाई मूल प्रकृतिको परातत्त्वले दशको भाग लगाई ती पञ्च महाभूतको आत्मा बनाइदियो, यी दश-दश अक्षरबाट आ-आफ्नो तत्त्वात्मक बीजको प्रभावले पञ्च तन्मात्रा बन्न गए । जस्तै 'हं'को प्रभाव आकाशात्मक दश अक्षर (लृ ॡ अं ङ ञ ण न म श ह) मा पर्दा शब्द तन्मात्रा, 'युंको प्रभाव वाय्वात्मक दश अक्षर (अ आ ऐ क च ट त प य ष) मा पर्दा स्पर्शतन्मात्रा, 'रं'को तैजसात्मक दश अक्षर (इ ई ए ख छ ठ थ फ र क्ष) मा पर्दा रूपतन्मात्रा, 'वं' को जलात्मक दश अक्षर (ऋ ॠ औ घ झ ढ ध भ व स) मा प्रभाव पर्दा रसतन्मात्रा, 'लं'को पृथिव्यात्मक दश अक्षर (उ ऊ ओ ग ज ड द ब ल ल्ह) मा प्रभाव पर्दा गन्ध तन्मात्रा बन्न गए । यी अक्षरका तत्त्वविभाजनको बारेमा आगममा यस्तो उक्ति छ–

> **तस्माद् वर्णाश्च पञ्चाशद् पञ्चभूतमया यत:**
> **तृतीया वर्गगा: कर्णाबोलला: पार्थिवा: मता: ।**
> संसिद्धि
> **नास औ वर्ग तुर्याश्च: वर्णा: स्मृता अपाम् ।**
> **नेत्रे द्वितीर्वगार्णा ऐ रक्षा: पावकात्मका: ॥**
> **वर्गाधानन्तझिण्टीशा अयषा मारुता: स्मृता: ।**
> **वर्गान्तिमा: कपोलौ शो हो बिन्दुश्चेति नाभसा:**
> **विसर्गस्तु प्रकृत्यात्मा सर्वभूतभयो यत: ॥**

फेरि यिनै पचास अक्षरमध्ये दश दश अक्षरको एक एक तत्त्वस्वरूप पृथिव्यादि पाँच तत्त्व (पञ्चभूत अर्थात् पञ्चतन्मात्राको पञ्चीकरण भएर दश महाविद्या तथा पन्ध्र सिद्धविद्याहरू बन्न जान्छन्, यसको बारेमा लेख्ने अवसर पाएमा उल्लेख गर्दै जानेछु । यसरी सोम-विश्वसोम) (यसलाई नीहारिका वा 'नेबुला' भन्दछन् ।) तथा तत्त्वहरूको प्रादुर्भाव भएको अध्वलाई "तत्त्वाध्व" भन्छन् । अब मन्त्राध्वको वर्णन गरिन्छ । यसमा आगमशास्त्रहरू भन्छन्–

> **मननाद्विश्वविज्ञानं त्राणं संसारबन्धनात् ।**
> **यत: करोति: संसिद्धिं स्मन्त्र इत्युच्यते तत: ॥**

मनन गर्नाले विश्वको विज्ञानशास्त्रको ज्ञान तथा भवबन्धनबाट मुक्ति (ब्रह्मत्व) जसबाट प्राप्त हुन्छ त्यसलाई मन्त्र भनिन्छ । नाद तरङ्गबारे अगाडिकै लेखमा उल्लेख भइसक्यो । अब यहाँ मन्त्रको अक्षर, बीज र कूटहरूको क्रमश: मनन हुँदा चित्तमा जम्मा भएका आकारहरू ब्रह्मरन्ध्रका ज्यादै सूक्ष्म रन्ध्रबाट निस्कँदा जापकलाई मन्त्रार्थले अनाहतमा लीन गराई तद्रूप बनाई प्रकट भएको नाद तरङ्गले वायुमा भएको स्वशक्तिले भेटेसम्मका कणहरूलाई एक गठ पारी यन्त्ररूप भई शीघ्र गतिले नाद ब्रह्ममा मिल्न जान्छ, यो अनुभवमा नै आउँछ । यसकारण मन्त्रलाई देवताको वाङमय मूर्ति मानिन्छ । तिनै बाह्य कणहरूमा अशुद्ध सङ्कल्पले पर्न गई केही बेर रही साधारण व्यावहारिक नादबाट बनेको सामान्य कणजस्तै फुटेर वायुमै छरिन्छ । स्थिर चित्त सङ्कल्पले केही तत्त्व बन्न सक्छ । निष्काम (निस्वार्थ) भावले शुद्ध सङ्कल्प पर्‍यो भने सोझै गएर नाद ब्रह्ममा मिल्छ । कुलार्णवतन्त्रले मन्त्रार्थ मन्त्र चैतन्य तथा मन्त्रशिखा नजानी जप गरेको फल हुँदैन भनी सङ्केत गरेको छ । यी तीनवटाको विशेष वर्णन पछिका लेखहरूमा गर्नेछु ।

उपर्युक्त सोम परशक्तिको प्रभावले घुम्दा जतातिरबाट घुम्दछ, त्यो 'पूर्व', त्यसको विपरीत 'पश्चिम' जतातिरबाट आकर्षण भइरहेको छ त्यो "उत्तर" त्यसको विपरीत "दक्षिण", वाङ्मनबाट अगोचर शून्य भएतिर "ऊर्ध्व" त्यसको विपरीत "अध:" भन्ने ६ दिशा (दिशति-अवकाश:, अतिसर्जने क्वीप् प्रत्यय:) हरूको कल्पना भयो । उपरिवर्णित भूतात्म वर्णहरूमध्ये पार्थिव तत्त्वका १० अक्षरहरूबाट जो जो तत्त्व बन्छन् ती तलतिर गएर नाद बिन्दुसहित एक अर्कामा अभ्यस्त हुन जाँदा प्रत्येकबाट प्रत्येक बीजरूप मन्त्र बनेर "अधराम्नाय" (आम्नाय-अभ्यस्यते "म्ना" अभ्यासले कर्मणिघञ् प्रत्यय:) यै क्रमले 'अप्' तत्त्वका १० अक्षरहरू दक्षिणतिर गएर "दक्षिणाम्नाय", तेजतत्त्वका १० अक्षरहरू पूर्वतिर गएर "पूर्वाम्नाय", वायवीय तत्त्वका १० अक्षरहरू पश्चिमतिर गएर "पश्चिमाम्नाय" आकाशतत्त्वका १० अक्षरहरू उत्तरतिर गएर "उत्तराम्नाय", तदनन्तर विसर्गतत्त्व ( : ) पूर्वोक्त प्रासादीतत्त्वमा मिलेर "ऊर्ध्वाम्नाय" यति छ आम्नाय निस्की आम्नायात्मक बीजहरू बने । अनि हरेक आम्नाय आत्मा-परमात्मा, ज्ञानात्मा तथा जीवात्मा यति ४ मा लय हुँदा २४ तत्त्व बनी २४ अक्षरको गायत्रीमन्त्र बन्यो । आम्नायको उत्पत्तिबारे परातन्त्रले बताएको छ, (विशेष जिज्ञासु पाठकले धनशमशेरज्यूको तान्त्रिक विज्ञान दर्पणको ६८ पृष्ठ हेर्नुहोला) ।

"अस्" धातुतिर विचार गरिन्छ । "अस्" अर्थात् छ भन्ने भाव तत्त्वमा परेपछि परमात्मालाई "तत्" त्यो पराइ भनी "प्रथमपुरुष" "त्वम" अर्थात् आफ्नो समीप रहेको जीव (जीवात्मा) लाई तिमी भनी "मध्यमपुरुष" तथा स्वयं आत्मालाई "म" (आफू) भन्ने भेदभाव ल्याई "उत्तमपुरुष" भन्ने नाम रह्यो । सारमा त्यो, तिमी र म भन्ने भेदभाव देखा पर्‍यो ।

त्यसपछि गायत्रीका पश्चिमाम्नायस्वरूप वर्णमा त्यै भेदभाव लिएर प्रकाशरूप परशिवको आभास पर्दा ऋग्वेदको "प्रज्ञानं ब्रह्म" भन्ने महावाक्य, गायत्रीको उत्तराम्नायस्वरूप वर्णमा त्यै किसिमले प्रकाशरूप परशिवको आभास पर्दा "अहं ब्रह्मास्मि" भन्ने

यजुर्वेदको महावाक्य, गायत्रीको पूर्वाम्नायात्मक वर्णमा प्रकाशरूप परशिवको आभास पर्दा "तत्त्वमसि" भन्ने सामवेदको महावाक्य, त्यसैगरी प्रकाशरूप परशिवको दक्षिणाम्नायस्वरूप वर्णमा आभास पर्दा "अयमात्माब्रह्म" भनी अथर्ववेदको महावाक्य निस्के, यसैबाट चारवेद निस्किए ।

ऊर्ध्वाम्नायात्मक वर्णमा भेदभाव साथ लिएर प्रकाशात्मक परशिवको आभास पर्दा गायत्रीको चतुर्थपाद बन्यो । त्यसपछि तुरीयपादले युक्त तुरीय गायत्री बन्यो । बीजाक्षर निर्माण हुँदा "ख" वर्णरूप अक्षरमा नाद बिन्दु मिलाएर मनन गर्दा "खँ" बीजाक्षर बन्छ । यसको उच्चारण न 'खम्' न 'खङ्' न नाकेश्वरबाट बोलिने 'खँ' हो । यो मनैबाट मात्र उच्चारण हुने हुँदा 'मननान्मन्त्र उच्यते' भनी यसलाई मन्त्र भनिन्छ । यसै गरी क्रीं श्रीं ऐं इत्यादि बीजाक्षर हरूको पनि ज्ञान गर्नुपर्छ । यसरी नै आम्नायभेदले धेरै व्यञ्जनवर्ण र स्वरवर्णमा समेत नादबिन्दु साथमा लिएको यौटा मात्रै स्वरवर्ण लागेमा कूटाक्षर बन्दछ । जस्तै ह्स्क्ष्म्लव्र्यूँ, क् च् ट् त् य् ॐ लगायत कूटबीजाक्षर (कूटाक्षर) हुन्छन् । यी बीजाक्षर र कूटाक्षरका तत्त्वहरूमा पूर्वाम्नायका बीजहरू तथा कूटहरूका तत्त्वहरू सृष्टिरूप, दक्षिणाम्नायको स्थितिरूप, पश्चिमाम्नायको संहाररूप, उत्तराम्नायको अनुग्रहरूप बने । अनि प्रत्येक महाभूत (पृथ्वी, जल तेज, वायु, आकाश) को आत्मारूप दश मात्रै भएता पनि आम्नायका बीज र कूट हुँदा चार आम्नायका ११७ सङ्केत भए । अधराम्नाय पार्थिव आत्मा भएकोले भूमण्डलतिर झरी चीनक्रम तथा महाचीन क्रमका मन्त्राक्षर लय भइरहे । आम्नायको सङ्केतहरू पूर्वाम्नायमा २४ दक्षिणाम्नायमा २५ पश्चिमाम्नाय ३२ र उत्तराम्नायको ३६ बने । ऊर्ध्वम्नायको सब महाभूतको साझा आत्मा विसर्ग हुनाले त्यो प्रासादी विद्यामा मिलेकोले सङ्केत बनेनन् । कुलार्णवतन्त्र तृतीयाल्लासको ४१, ४२, ४३, ४४, ४५ श्लोकहरूले माथिकै कुराहरूलाई सङ्केत गरेका छन्, विशेष जिज्ञासुले त्यहीं हेर्नुहोला । यस्तै किसिमले अनेक वर्ण, बीजहरू, कूटाक्षर बने । यीमध्ये सर्वप्रथम "ऊर्ध्वाम्नाय" को तीन बीजको मन्त्र सर्वप्रथम बनेकोले यसलाई बालामूलमन्त्र भन्छन् । काम (प्रकाश) 'अ' वर्णमा कामकलाशक्ति 'ई'को संयोग हुँदा 'ऐ' बन्यो । त्यसमा नाद बिन्दु मिलेर बीज बनी वाग्बीज भई ज्ञानरूप बन्दा मोक्ष दिने वागीश्वरी शक्ति बनिन्, कला को स्वरवर्णको सट्टा त्यसमा 'ई'को संयोग हुँदा 'क्लीं' भयो, त्यसमा नादबिन्दु मिलेर कामबीज बनी क्रियारूप बन्दा कामना पूरा गरिदिने कामरूपा बनिन् । ब्रह्मसूत्र क 'स:'को 'अ' वर्णको सट्टा हृदयसूचक औ प्रवेश गर्दा सर्गान्त (विसर्ग अन्तमा आएको) शक्तिबीज बनी इच्छारूपा भई शिव (कल्याणदायी) रुपिणी पराशक्ति बनिन् । यी तीन बीजहरू एक ठाउँमा हुँदा त्रिबीजात्मक बनी त्रिशक्तिस्वरुपिणी बनिन् ।

त्यसपछि आकाशको शब्द, वायुको स्पर्श तेजको रूप जलको रस तथा पृथ्वी गन्ध गरी पञ्च तन्मात्रा छन् । यसमा आकाशमा एक गुण शब्द वायुमा दुई गुण शब्द+स्पर्श, तेजमा शब्द+स्पर्श+रूप तीन गुण, जलमा शब्द+स्पर्श+रूप+रस गरी चार गुण, पृथ्वीमा शब्द+स्पर्श+रूप+रस+गन्ध पाँच गुण, यी सबै जम्मा गर्दा १५ भए । यिनै १५ मध्ये वाग्बीजको प्रभाव पर्दा ५ वर्ण मिलेको वाग्भवकूट बन्यो । त्यसपछि ६ मा कामबीजको प्रभाव पर्दा ६ वर्णको कामराजकूट बन्यो । शेष वर्ण ४ मा शक्तिबीजको प्रभाव पर्दा ४ अक्षरको शक्तिकूट बन्यो । यी तीन कूटहरू मिलेर श्रीविद्यापञ्चदशी महामन्त्र बन्यो । त्यसपछि यो विद्याले गायत्रीका चारै पाउलाई आफूभित्र लीन गरायो । (यस विषयमा त्रिपुरातापिन्युपनिषद्ले विस्तृतरूपले व्याख्या गरेको छ, विशेष जिज्ञासुले त्यसको अध्ययन गर्नुहोला) । यी तीन कूटका १५ अक्षरमध्ये शिवको भाग प्रकाशको सत्ताले बनेको ५ अक्षर, शक्ति (विमर्श सत्ता) को भागले बनेको ७ अक्षर, शिव तथा शक्ति दुवैको भागले बनेको तीन माया बीज छन् । 'महायोनितन्त्र' सङ्केतरूपमा भन्छ :-

**कत्रयं हृदयञ्चैव शैव भागाः प्रकीर्तिताः ।**
**शक्त्यक्षराणि शेषाणि ह्रींकारा उभयात्मिकाः ॥**

(यसकारण मन्त्रार्थ मन्त्रचैतन्य मन्त्रशिखाका जानकारी तथा प्रयोगसहित श्रीविद्यापञ्चदशीको अङ्ग-प्रत्यङ्ग पूरा गरी कादिमत हादिमत तथा सादिमतका तीन तीन दीक्षाका नौ दीक्षा क्रमश: लिई पुरश्चरण गर्दै नौवटै क्रम पूरा गरी गएमा अर्को जन्म हुँदैन, यसमा आगम (तन्त्र) को वचन छ :-

**यस्य नो पश्चिमं जन्म यदि वा शक्तरः स्वयम्**
**तेनैव लभ्यते विद्या श्रीमत्पञ्चदशाक्षरी ।**
**सुन्दरी तारिणी काली क्रमदीक्षाभिगामिनी**
**क्रमपूर्णो महेशानि क्रमाच्छङ्गुर्भविष्यति ॥**
**तन्त्रचिन्तामणिवचनम् ॥**

यसरी महावाक्य, बीजाक्षर कूटाक्षर आदिको प्रादुर्भाव भएको अध्वालाई मन्त्राध्व भन्छन् । क्रमश:





# आयुर्वेद भनेको यति मात्रै हो त ?

आयुर्वेदलाई आफैँमा एउटा सम्पन्न एवं सम्पूर्ण विधाको रूपमा लिइन्छ । यसमा विभिन्न काष्ठौषधी (बोट-विरुवाबाट बनेका औषधी), रसौषधी (रस, पारद, धातु, उपधातु आदिबाट बनेका औषधी) को प्रयोग गरिन्छ भन्ने जानकारहामीले हासिल गर्‍यौं । पञ्चकर्मको बारेमा पनि शृंखलाबद्धरूपमा जानकारी हासिल गर्दै आइरहेका छौं । वमन, विरेचन, वस्ति, स्नेहन, स्वेदन र यी प्रक्रियामा प्रयोग हुने विशेष यन्त्रहरू वस्ति यन्त्र, वस्ति पुटक, स्वेदन, बाकसको बारेमा त हामीले जानकारी हासिल गरी नै सक्यौं । अहिलेको समयमा यो त्यति अनौठो विषय पनि होइन किनकि एक स्वस्थ एवं सुखपूर्ण जीवन जिउन चाहने जो कोही व्यक्ति कुनै रोग नभए पनि पञ्चकर्मजस्तो पद्धतिको प्रयोग गरेर आफूलाई अझ स्वस्थ, ओजपूर्ण, स्फूर्ति र तनावरहित बनाउने trend आजभोलि निकै चलेको पाइन्छ । यसपालिको अंकमा भने पञ्चकर्ममा एक प्रमुख कर्ममा पर्ने तर नेपालमा त्यति प्रचलनमा नआएको पञ्चकर्म पद्धति रक्तमोक्षण, जलौका विधिसम्बन्धी सामान्य जानकारी हासिल गरौं ।

जलौका (जुका) को प्रमुख भूमिका हुन्छ रक्तमोक्षण वा जलौका विधिमा । हामी जुका भन्ने बित्तिकै डराउँछौं । तर जलौका, जूका (Hurudinaria Granulosa) प्राय: मीठो पानी हुने तलाउ, पोखरीमा पाइन्छ । आयुर्वेदमा यसको आफ्नै महत्त्व छ । यो परजीवि जस्तै hermaphrodile जन्तु हो जो प्राय:जसो स्तनधारी प्राणीको रगत चुसेर आफ्नो जीवन निर्वाह गर्छ । यही रक्त चुस्ने कलाको कारण वा विशेषताको कारण नै अशुद्ध रगतलाई निर्हरण गर्न आयुर्वेदको पञ्चकर्ममा यसको प्रयोग गरिन्छ । यसले रगत चुस्नको लागि आफ्नो अग्रभाग (मुख) को प्रयोग गर्दछ । यसरी रगत चुस्नाले जलौकाको शरीरमा धारायुक्त रगतको प्रवाह हुन्छ । यस्तो धारायुक्त प्रवाह भए पनि रगत चाहिँ जम्दैन किनकि जलौकाको शरीरमा उत्पन्न रक्त स्कन्दन प्रतिरोध गर्ने तत्त्व अर्थात् (Anticogulant) Hiruding हुन्छ जसले रगतलाई जम्न दिँदैन । त्यसैले विरामीको शरीरको जुन भागमा जुका लगाएर रगत सोस्नु पर्ने हो, त्यो रगत सोस्ने बेलामा जम्दैन र फोहर रगत फाल्न मद्दत गर्दछ ।

जुका सविष एवं निर्विष गरी दुई प्रकारका हुन्छन् र हामीले जलौका विधिमा प्रयोग गर्ने जुका निर्विष हुन्छ । सविष जलौका प्रयोग गरेमा जुकाले टोकेको ठाउँमा दाह, शोफ, पाक, कण्डू, सानो-सानो पीडिका, ज्वर उत्पन्न हुन्छ । उपचारमा प्रयोग हुने जुकालाई सुगन्धित नयाँ घडामा राख्नुपर्छ । सिंघाडा, करौरुक, शालूक, शैवाल, माटो पुष्करीज आदि खानको लागि तथा मधुर, शीतल एवं स्वच्छ जल पिउनको लागि दिनुपर्छ । जुकाले निकालेको ग्याल (लालास्राव) आदिबाट फोहर नहोस् भन्नाका लागि तीन तीन दिनको अन्तरमा यसको अन्नपानलाई बदल्नुपर्छ र पाँच दिनको अन्तरमा उपर्युक्त प्रकारको जल भएको अर्को नयाँ घडामा जुकालाई राख्नुपर्दछ । दूषित रगतको राम्रोसँग वमन नहुनाले तथा बारबार रुग्ण स्थानमा लगाउनाले जुका मूर्छित हुन्छ । यस्तो अवस्थामा पानीले भरिएको पात्रमा जुकालाई राख्नुपर्दछ र यदि यस्तो गर्दा पनि जुकाको चेष्टा नआएमा र अन्न खान पनि मन नगरेमा जुका मरेको भनी ठान्नुपर्दछ ।

जलौका संग्रह गर्ने उत्तमकाल शरद ऋतु हो किनकि यस समयमा तलाउको जल स्वच्छ हुन्छ र चिकित्सामा प्रयोग गरिने निर्विष जुका यस्तै स्वच्छ जलमा बस्दछन् । यदि घडा नभएको अवस्थामा सिसाको अक्वारियमको पनि प्रयोग गर्न सकिन्छ ।

### जलौकावचारण विधि

यदि जस्तो ठाउँको जुका नपाएमा, हल्दी (बेसार) एवं सरस्यूँको कल्पमा मिसिएको पानीमा जुकालाई छोडिदिने, जब पुरीष (दिशा, मल) त्याग गर्छ तब काँजी पानी अथवा मोही (तक्र) मा राख्नु, त्यसपछि पुन: शुद्ध जलमा राख्ने । अनि आरामसँग बसेको अशक्त सुतेको रोगीमा निश्चित भागमा जुका लगाउने । जुका लगाउने स्थानमा माटो वा गोबरको चूर्ण थोरै रगडेर रुक्ष बनाएर जुका लगाउने । यदि जुका जहाँ लाग्न पर्ने हो, त्यस स्थानमा नलागेमा दूध, घिउ, नौनी अथवा रगतको कोही थोपा राखिदिने अथवा बेसार एवं कुनै शस्त्रद्वारा सानो पातलो चिरा बनाइदिने । जब जुकाको श्वास प्रश्वासको स्पन्दन अनुभव हुन्छ तब यो थाहा हुन्छ कि जुकाले रगत चुसिरहेको छ । त्यस समयमा जुकालाई भिजाएको कपडाले ढाकिदिने र त्यसको माथिबाट जलले सिंचन गर्ने । जसरी हाँसले पानीमा मिसिएको दूधबाट दूध मात्रै लिन्छ त्यसै प्रकारले जुका शुद्ध रगतबाट पहिला दूषित रगत चुस्छ । जब त्यस स्थानमा रोगीलाई तोद (सूईले घोचेको जस्तो पीडा) हुन्छ, त्यो कण्डू (चिलाउनु) थाल्छ तब शुद्ध रगत खाइरहेको छ भन्ने जानेर जुकालाई हटाउनु पर्दछ । जुकालाई लोभ लागेर त्यस स्थानबाट हट्न नमानेमा त्यसको मुखमा थोरै मधु अथवा लवण चूर्ण लगाउनु पर्दछ ।

बेसार एवं सर्स्यूँको कल्क मिश्रित जलमा काँजी, आदि जलमा छोड्नाले जलौकाको शोधन हुन्छ । जुकाको भोक बढ्छ एवं उसमा स्फूर्ति आउँछ र रक्त प्रचूषण गर्ने इच्छा उत्पन्न हुन्छ । जलौका विधि गर्नुभन्दा पहिले विरामीमा स्नेहन, स्वेदन गरेमा बढी लाभ हुन्छ ।

जय गुरुदेव !

परमपूज्य सद्‌गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ एवं
परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको कृपा,
अनुकम्पास्वरूप कास्की, लेखनाथ-१२ खुदीमा
गुरु आश्रम भवन निर्माण गर्न सफल भएकोमा
यस पुनीत कार्यमा सहयोग गर्ने सम्पूर्णलाई हार्दिक धन्यवाद
दिँदै आश्रमको उत्तरोत्तर प्रगतिको कामना गर्दछौँ ।

**गोविन्द तुलाचन, मीरा तुलाचन**
**तथा परिवार,**
**पृथ्वीचोक, पोखरा**

परमपूज्य सद्‌गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ एवं
परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको कृपा,
अनुकम्पास्वरूप कास्की, लेखनाथ-१२ खुदीमा
गुरु आश्रम भवन निर्माण गर्न सफल भएकोमा
यस पुनीत कार्यमा सहयोग गर्ने सम्पूर्णलाई हार्दिक धन्यवाद
दिँदै आश्रमको उत्तरोत्तर प्रगतिको कामना गर्दछौँ ।

**भूपेन्द्र खाँण, नमा खाँण**
**तथा परिवार,**
**लेखनाथ-१२, खुदी**

परमपूज्य सद्‌गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ एवं
परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको कृपा, अनुकम्पास्वरूप
कास्की, लेखनाथ-१२ खुदीमा
गुरु आश्रम भवन निर्माण गर्न सफल भएकोमा
यस पुनीत कार्यमा सहयोग गर्ने सम्पूर्णलाई हार्दिक धन्यवाद दिँदै
आश्रमको उत्तरोत्तर प्रगतिको कामना गर्दछौँ ।

**विदुर सापकोट, प्रतिभा सापकोटा**
**तथा परिवार,**
**लेखनाथ-१२, खुदी**

परमपूज्य सद्‌गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ एवं
परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको कृपा,
अनुकम्पास्वरूप कास्की, लेखनाथ-१२ खुदीमा
गुरु आश्रम भवन निर्माण गर्न सफल भएकोमा
यस पुनीत कार्यमा सहयोग गर्ने सम्पूर्णलाई हार्दिक धन्यवाद
दिँदै आश्रमको उत्तरोत्तर प्रगतिको कामना गर्दछौँ ।

**नारायण पौडेल, लक्ष्मी पौडेल**
**तथा परिवार,**
**लेखनाथ-१२, खुदी**

परमपूज्य सद्‌गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ एवं
परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको कृपा, अनुकम्पास्वरूप
कास्की, लेखनाथ-१२ खुदीमा
गुरु आश्रम भवन निर्माण गर्न सफल भएकोमा
यस पुनीत कार्यमा सहयोग गर्ने सम्पूर्णलाई हार्दिक धन्यवाद दिँदै
आश्रमको उत्तरोत्तर प्रगतिको कामना गर्दछौँ ।

**गजेन्द्र ढकाल, कल्पना ढकाल**
**तथा परिवार,**
**लेखनाथ-१२, खुदी**

परमपूज्य सद्‌गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ एवं
परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको कृपा,
अनुकम्पास्वरूप कास्की, लेखनाथ-१२ खुदीमा
गुरु आश्रम भवन निर्माण गर्न सफल भएकोमा
यस पुनीत कार्यमा सहयोग गर्ने सम्पूर्णलाई हार्दिक धन्यवाद
दिँदै आश्रमको उत्तरोत्तर प्रगतिको कामना गर्दछौँ ।

**डा. महावीर विष्ट, सानुमैंया विष्ट**
**तथा परिवार, काठमाडौं**

दिव्य गुरु महोत्सव आश्रम, बसुन्धरा

श्री शिवगोरक्ष हवन, मृगस्थली

तान्त्रोक्त महालक्ष्मी हवन, लगनखेल

तान्त्रोक्त बगलामुखी हवन, पाटन

तान्त्रोक्त विन्ध्यवासिनी हवन, कास्की

गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमका विद्यार्थीहरू ध्यान गर्दै

वृहस्पतिबार गुरु पूजन, सम्पर्क कार्यालय तीनकुने

# शुभकार्यको शुभारम्भ शुभमुहूर्तमा

*वराहमिहिरले शताब्दियौँपूर्व कालगणना गरेर यो सिद्ध गरेका थिए कि प्रत्येक दिन मानिसको शुभ र अशुभ दुवै प्रकारका समय आउँछन् र कालज्ञानअनुसार शुभ समयमा कार्य गरेमा निश्चय नै कार्यमा सफलता प्राप्त हुन्छ ।यद्यपि ज्योतिषमा दिशासूल, योगिनी, चन्द्रमा आदिको उल्लेख छ र यो पनि बताइएको छ कि यी सबैलाई ध्यानमा राखेर नै शुभकार्य प्रारम्भ गर्नु पर्दछ ।महिराचार्यका अनुसार यदि हामीलाई कालज्ञान छ भने यी कुराहरूलाई ध्यानमा राख्नु आवश्यक छैन किनकि कालज्ञान आफैँमा अत्यन्त महत्त्वपूर्ण छ ।यसैले यसमा व्यतिपात, दिशासूल आदिको अशुभ प्रभाव पर्दैन ।यात्रा, विवाह, भेटघाटलगायतका कुनै पनि शुभकार्य प्रारम्भ गर्दा कालज्ञानअनुसार गरिएमा ती कार्यहरू सफल हुन्छन् भनेर मिहिराचार्य भन्दछन् ।*

*प्रस्तुत शुभ समयहरू (सर्वश्रेष्ठ तथा श्रेष्ठ) परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूद्वारा रचित 'ज्योतिष और काल निर्णयु नामक हिन्दी ग्रन्थमा आधारित रहेर तयार पारिएको हो ।*

**२०७० श्रावण ६, १३, २० र २७ गते आइतबार**

**सर्वश्रेष्ठ–** दिन ६:००–६:४८, रात्रि ६:४८–७:३६, ३:३६–४:२४

**श्रेष्ठ–** दिन ६:४८–१०:००, रात्रि ८:२४–१०:००, ४:२४–६:००

**२०७० श्रावण ७, १४, २१ र २८ गते सोमबार**

**सर्वश्रेष्ठ–** रात्रि ७:३६–९:१२

**श्रेष्ठ–** दिन ६:००–७:२४, १०:४८–१:१२,३:३६–५:१२
रात्रि ९:१२–१०:००, १:१२–२:४८

**२०७० श्रावण १, ८, १५, २२ र २९ गते मंगलबार**

**सर्वश्रेष्ठ–** रात्रि ७:३६–९:१२, ३:३६–४:२४

**श्रेष्ठ–** दिन ६:००–८:२४, १०:००–१२:२४, ४:३६–५:१२
रात्रि ९:१२–१०:००, १२:२४–२:००, ४:२४–६:००

**२०७० श्रावण २, ९, १६, २३ र ३० गते बुधबार**

**सर्वश्रेष्ठ–** दिन ३:३६–४:२४, रात्रि ९:१२–१०:४८

**श्रेष्ठ–** दिन ७:३६–९:१२, ११:३६–११:५४, ४:२४–६:००
रात्रि ६:४८–९:१२, २:००–६:००

**२०७० श्रावण ३, १०, १७, २४ र ३१ गते बिहीबार**

**सर्वश्रेष्ठ–** रात्रि ७:३६–९:१२

**श्रेष्ठ–** दिन ६:००–८:२४, १०:४८–१:१२, ४:२४–६:००
रात्रि ९:१२–१०:००, १:१२–२:४८, ४:२४–६:००

**२०७० श्रावण ४, ११, १८, २५ र ३२ गते शुक्रबार**

**सर्वश्रेष्ठ–** रात्रि १:१२–३:३६

**श्रेष्ठ–** दिन ६:४८–१०:२४, ४:२४–५:१२
रात्रि ८:२४–१०:४८, ४:२४–६:००

**२०७० श्रावण ५, १२, १९ र २६ गते शनिबार**

**श्रेष्ठ–** दिन १०:३६–१२:२४, ३:३६–५:१२
रात्रि ८:२४–१०:४८, २:००–३:३६, ४:२४–६:००

---

*नोटः दिन भन्नाले बिहान ६:०० देखि साँझ ६:०० सम्म*
*रात्रि भन्नाले साँझ ६:०० देखि अर्को बिहान ६:०० सम्म*



—हस्तरेखा विज्ञान—

# हस्त परिचय

### ९. डाक्टरः

जसको हत्केलामा बुध पर्वत पूर्णरूपमा विकसित छ तथा कान्छी औँला पूरा लामो छ भने र जसको सिरा साहिँलीको माथिको खण्ड (पौर) को मध्यसम्म गएको छ भने तथा बुध क्षेत्रमा तीन पटक उभिएको रेखा छ भने यस्तो व्यक्ति एक सफल डाक्टर हुन्छ ।

यदि माथि लेखिएका गुण हत्केलामा छन् र यसका साथसाथ मंगल पर्वत अत्यन्त विकसित छ तथा मंगल रेखा पनि पुष्ट एवं प्रबल छ भने त्यो व्यक्ति एक सफल सर्जन हुन्छ ।

यदि मंगल पर्वत दबिएको छ भने, यसका अतिरिक्त अन्य सबै गुण हत्केलामा छन् भने तथा वृहस्पति पूर्ण विकसित देखिन्छ भने र त्यसमा वर्गको चिन्ह छ भने त्यो व्यक्ति ख्यातिप्राप्त वैद्य हुन्छ ।

### ८. नाविक (जलसेना)ः

जो डुंगा वा जहाजमा कार्य गर्दछ अथवा नेवीमा उच्चपदस्थ अधिकारी हुन्छ उसलाई यहाँ नाविकको नामले सम्बोधित गरेको छु । एक श्रेष्ठ तथा कुशल जलसेना नायकको हातले पूर्ण लम्बाई लिएको हुन्छ तथा त्यसमा चन्द्र पर्वत पूर्ण विकसित अवस्थामा हुन्छ । जसको हत्केलामा चन्द्र पर्वत विकसित छ तथा चन्द्रमाको पर्वतबाट रेखा निस्केर सूर्यतिर गइरहेको छ एवं भाग्यरेखा तथा मस्तिष्क रेखा आफैँमा पूर्ण विकसित छ भने त्यो व्यक्ति निःसन्देह जल सेनाध्यक्ष हुन्छ ।

यदि चन्द्र पर्वत कम उठेको देखिन्छ भने वा चन्द्ररेखा कमजोर छ र अन्य सबै गुण हत्केलामा छन् भने ऊ नेवीमा उच्च पदमा कार्य गर्ने हुन्छ ।

यदि चन्द्र पर्वत अत्यन्त दबिएको छ तथा भाग्यरेखा कमजोर छ भने त्यो केवल डुंगा चलाउने नाविक हुन्छ ।

### १०. इन्जिनियरः

यहाँ इन्जिनियर भन्नाले मेरो तात्पर्य हो कि वैज्ञानिक एवं म्याकेनिकसित पनि छ । यदि कोही मनुष्यका सबै औँलाहरूले पूरा लम्बाई लिएका छन् तथा शनि पर्वत विकसित छ तथा त्यसमाथि भाग्यरेखा निर्दोषरूपले आएर बसेको छ भने एवं बुध पर्वतमा तीन-चार उठेका रेखाहरू छन् भने त्यो व्यक्ति एक सफल वैज्ञानिक हुन्छ ।

यदि माथि लेखिएका गुण छन् तर वृहस्पति पर्वत कमजोर छ भने त्यो एक सफल इन्जिनियर हुन्छ । यदि इन्जिनियरको चिन्ह छ तथा चन्द्र पर्वत श्रेष्ठ छ भने त्यो वाटर वर्क्समा इन्जिनियर हुन्छ ।

यदि माथि लेखिएका चिन्ह हत्केलामा छन् र मस्तिष्क रेखा र शनि रेखा पूर्ण विकसित छ भने त्यो व्यक्ति एक सफल वायुयान चालक हुन्छ तर उसमा चन्द्र पर्वत तथा चन्द्र रेखा अत्यन्त श्रेष्ठ हुनु आवश्यक छ ।

## सिद्धाश्रम शक्ति केन्द्रका गतिविधि

महाप्रयाण दिवस, बसुन्धरा आश्रम

महाप्रयाण दिवस, बसुन्धरा आश्रम

महाप्रयाण दिवस, कास्की

महाप्रयाण दिवस, गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम

# अरविन्द गुरुदेवको सान्निध्यतामा महाकाली एवं अप्सरा साधना शिविर सम्पन्न

परमपूज्य सद्गुरुदेवहरूको कृपा, अनुकम्पास्वरूप सिद्धाश्रम शक्ति केन्द्रले विविध कार्यक्रमहरूमार्फत् आध्यात्मिक चेतना जगाउने गरिरहेको सन्दर्भमा गत आषाढ १५ गते महाकाली एवं अप्सरा साधना शिविर सम्पन्न गरेर यस क्रमलाई अघि बढाउने कार्यमा थप पहल भयो । बिहान १० बजेदेखि शुभारम्भ भएको उक्त शिविर कार्यक्रममा गुरु पूजन, नृत्य, भजनकीर्तन, विमोचन आदि कार्यक्रमहरू सम्पन्न भएका थिए ।

उक्त कार्यक्रममा पूज्य अरविन्द गुरुदेवले गुरुदीक्षालगायत विशेष शक्तिपात दीक्षाहरू पनि प्रदान गर्नुभएको थियो । खचाखच भरिएको कमलपोखरीस्थित अग्रवाल भवनमा शिविरमा सहभागीहरूले पूज्य अरविन्द गुरुदेवबाट अन्य ज्ञानरत्नहरू पनि प्राप्त गर्नुभएको थियो । कार्यक्रममा महाकाली तथा अप्सरा साधनामा भाग लिनेहरूको संख्या उल्लेख्य रहेको थियो । गुरुधाम जोधपुरबाट आउनुभएका साधकसाधिका गुरुभाइहरूलगायत सिद्धाश्रम शक्ति केन्द्रका साधकसाधिकाहरूको सुमधुर भजनले कार्यक्रममा थप ऊर्जा थप्ने कार्य भयो भने भजनकीर्तनमा नृत्य गर्नेहरू, जयकार गर्नेहरूबाट कार्यक्रमलाई थप रौनक बनाउने कार्य भयो ।

कार्यक्रममा पूज्य अरविन्द गुरुदेवले नेपाललाई मस्तीको स्थान भन्नुहुँदै यो मस्ती बाहिरको वस्तुमा नभएको तथ्यलाई उजागर गर्नुहुँदै मस्ती त सद्गुरुदेवसँग जीवनभरि हिँड्नुमा छ भन्नुभयो । पूज्य अरविन्द गुरुदेवले जीवनमा मस्ती पाउनु छ भने गुरु प्राप्त गर्नै पर्ने बताउनुभयो । उहाँले अहंकार, भय र क्रोधलाई हटाउने नै सही अर्थमा मनुष्य हुन्छ भन्नुभयो । उहाँले अगाडि भन्नुभयो– क्रोध, भय, अहंकार, अश्रद्धा, अप्रेम हटाउन तपस्या गरिन्छ, यसबाट देवतुल्य बन्न सकिन्छ । बाधा र अड्चनहरूलाई जित्ने नै तपस्वी, मनिषी हुने बताउनु हुँदै जीवनमा सौर्य, हिम्मत र निश्चिन्तताबाट यस्तो अवस्था ल्याउन सकिने पूज्य अरविन्द गुरुदेवले बताउनु भयो ।

उहाँले जीवनमा निमग्न स्थिति आवश्यक हुने बताउनु हुँदै मेरो जीवनमा गुरु हुनुहुन्छ, ईश्वर हुनुहुन्छ भन्ने व्यक्ति कहिल्यै पराजित नहुने वास्तविकतातर्फ ध्यानाकर्षण गर्नुभयो । उहाँले मानिसहरूको जीवनमा बाधाहरू आउँछन् तर यसबीच पनि गुरु र ईश्वर प्राप्त गर्दछौँ भने हामीले विजय प्राप्त गर्न सक्दछौँ भन्नुभयो ।

उहाँले आफूले साधना शिविरका लागि नेपाल आगमन गर्दा पाएको प्रेम नेपालका शिष्यहरूमा मात्र भेटाएको गौरव बाँड्नुभयो । पूज्यपादले नेपाली शिष्यहरूलाई जीवित, जागृत र सक्षम बताउनुभयो ।

उक्त अवसरमा पूज्य अरविन्द गुरुदेवबाट सन् २०१४ मा पनि कैलाश मानसरोवर लैजाने उद्घोष गर्नुहुँदा हल तालिको गड्गडाहटले भरिएको थियो । उक्त अवसरमा पूज्य गुरुदेवले विगत वर्षमा कैलाश मानसरोवर जानेहरूको संख्या ऐतिहासिक भएको उल्लेख गर्नुहुँदै यति ठूलो संख्यामा कैलाश मानसरोवर यात्रा गर्नेहरूको समूह अहिलेसम्मकै पहिलो भएको स्मरण गराउनु भयो । उहाँले २०१४ मा कैलाश मानसरोवर जानेहरूलाई सशरीर सिद्धाश्रम लगेर सद्गुरुदेवको दर्शन गराउने इच्छा पनि जाहेर गर्नुभयो । यसरी सार्वजनिकरूपमा सशरीर सिद्धाश्रममा लैजाने पूज्य अरविन्द गुरुदेवको उद्घोषबाट सहभागीहरूको तालिको गडगडाहटले शिविरस्थल निकै बेर घन्केको थियो ।

उहाँले अन्तमा शिव प्राप्ति कल्याणको भावना प्राप्ति हो, कल्याण गर्ने भावना ल्याउने हो भने गुरु माध्यम हुन सक्ने बताउनु हुँदै गुरुलाई पूर्णरूपमा ग्रहण गर्न सकियोस् भनेर सबैलाई आशीर्वाद गर्नुभयो ।

पूज्य अरविन्द गुरुदेवले सिद्धाश्रम शक्ति केन्द्र र अन्तर्राष्ट्रिय सिद्धाश्रम साधक परिवार जोधपुरको संयुक्त प्रस्तुति 'गुरुवर करदो कृपा' सिडिको पनि लोकार्पण गर्नुभयो ।

## मन्त्रजपसहित महाप्रयाण दिवस सम्पन्न

परमपूज्य सद्गुरुदेव डा.नारायण दत्त श्रीमालीको रूपमा परमहंस स्वामी निखिलेश्वरानन्द महाराजले अध्यात्मका सम्पूर्ण गूढ रहस्यहरूलाई संसार सामु उजागर गरेर सम्पूर्ण ज्ञानलाई पुनर्स्थापित गर्नका लागि दादा गुरुदेव स्वामी सच्चिदानन्द महाराजको आज्ञालाई शिरोधार्य गर्दै यस धरामा अवतरित हुनुभएको थियो । आफ्ना सम्पूर्ण शिष्यहरूलाई आध्यात्मिक क्रान्ति र विद्रोहको पाठ सिकाएर आध्यात्मिक युग निर्माणको सम्पूर्ण कार्यभार आफ्नै शिष्यहरूलाई जिम्मा लगाएर जुलाई ३ तारिख सन् १९९८) मा महायोगीले महाप्रयाण लिनुभएको थियो । उहाँको महाप्रयाण भएको दिनलाई सिद्धाश्रम शक्ति केन्द्रले महाप्रयाण दिवसको रूपमा मनाउँदै आइरहको छ । यसै क्रमा गत आषाढ १९ गते १३ औँ महाप्रयाण दिवसलाई मन्त्रजपका साथ सम्पन्न गऱ्यो । यस क्रममा सिद्धाश्रम शक्ति केन्द्र, केन्द्रीय कार्यालय बसुन्धरा, संस्थाका विभिन्न सम्पर्क कार्यालयहरू र बसुन्धरास्थित गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रममा बिहान ९ बजेदेखि बेलुकी ४ बजेसम्म गुरुमन्त्र जप गरिएको थियो । लाखौँको सङ्ख्यामा जप गरिएको मन्त्र बेलुकी ५ बजेको आरतीपछि दीपावलि गरी समापन गरिएको थियो ।

## गोरक्ष प्रकट तिथि एवं दिव्य गुरु महोत्सव

परमपूज्य सद्‌गुरुदेवहरूको कृपा, अनुकम्पास्वरूप सिद्धाश्रम शक्ति केन्द्रले हरेक महिनाको पूर्णिमालाई गोरक्ष प्रकट तिथिको रूपमा मनाउने क्रममा गत आषाढ ११ गते निखिल स्तवन, गोरक्ष स्तवन, नवनाथ स्तोत्र, नामसङ्कीर्तन, गुरु पादुका पूजन, मन्त्रजपका साथ यस अवसरलाई हर्षोल्लासपूर्वक सम्पन्न गर्‍यो । कार्यक्रममा पूजन गर्ने सौभाग्य संस्थाको तर्फबाट सावरपन्थी सदस्यज्यू तथा साधिका मिङ्मे शेर्पाले पनि पाउनुभएको थियो र सदाझैं साँझ दीपावलि पनि गरिएको थियो ।

त्यस्तै, परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यू (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज) अवतरित हुनुभएको अंग्रेजी महिनाको २१ तारिखलाई दिव्य गुरु महोत्सवको रूपमा मनाउने क्रममा सिद्धाश्रम शक्ति केन्द्रले गत आषाढ ७ गते (June 21 तारिख) उक्त महोत्सवलाई हर्षोल्लासपूर्वक मनायो । बसुन्धरा आश्रममा आयोजित उक्त महोत्सवमा निखिल स्तवन, गोरक्ष स्तवनको सस्वर पाठ, गुरु पादुका पूजन, मन्त्रजप, हवन, आरतीलगायत नृत्य आदि कार्यक्रमहरू सम्पन्न भएका थिए । कार्यक्रममा पूजन गर्ने सौभाग्य संस्थाको तर्फबाट सावरपन्थी सदस्यज्यू तथा साधिका श्वेता पुडासैनीले पाउनुभएको थियो ।

उक्त अवसरमा बोल्नु हुँदै सावरपन्थी साधक रामजी अर्यालज्यूले जीवन निरस नभई सप्तरंगी हुनु पर्ने धारणा राख्नु हुँदै सद्‌गुरुदेवले यसैका लागि जप, ध्यान, पूजा, पाठ, भजनकीर्तन आदि सबै विधाहरू दिनुभएको बताउनु भयो । उहाँले यी सबै कुराहरूले हाम्रो आत्माको उत्थान हुने बताउनु हुँदै आफ्नो मार्गमा हिँड्नेहरूको जीवनलाई सप्तरंगी बनाइदिने सद्‌गुरुदेवले भन्नुभएको स्मरण गराउनुभयो ।

## हवन कार्यक्रम

सिद्धाश्रम शक्ति केन्द्रबाट हरेक महिना सम्पन्न हुँदै आइरहेको मासिक कार्यक्रमअन्तर्गत हवन कार्यक्रमहरू गत महिना निम्नानुसार सम्पन्न भए–

आषाढ ३ गते सोमबार– श्री शिव गोरक्ष हवन, गोरखनाथ मन्दिर, पशुपति, मृगस्थली, बिहान ८:००-९:०० बजे। आषाढ ४ गते मंगलबार– तान्त्रोक्त वटुक भैरव हवन, वटुक भैरव मन्दिर, लगनखेल, बिहान ७:००-८:०० बजे । आषाढ ५ गते बुधबार– तान्त्रोक्त महालक्ष्मी हवन, महालक्ष्मी मन्दिर, लगनखेल, बिहान ८:००-९:०० बजे । आषाढ ६ गते बिहीबार– तान्त्रोक्त बगलामुखी हवन, बगलामुखी मन्दिर, पाटन, बिहान ८:००-९:०० बजे ।

त्यस्तै मासिक हवनकै क्रममा आषाढ ५ गते बुधबार– तान्त्रोक्त विन्ध्यवासिनी हवन, विन्ध्यवासिनी मन्दिर, पोखरा, कास्की, बिहान ८:००-९:०० बजे । आषाढ ६ गते बिहीबार– तान्त्रोक्त वेदव्यास हवन, वेदव्यास गुफा, तनहुँ, बिहान ८:००-९:०० बजे । आषाढ ४ गते मंगलबार– तान्त्रोक्त गणपति हवन, सूर्यविनायक, भक्तपुर, बिहान ७:००-८:०० बजे, तान्त्रोक्त चण्डेश्वरी हवन, चण्डेश्वरी मन्दिर, काभ्रे, बिहान ७:००-८:०० बजे । आषाढ १ गते शनिबार– तान्त्रोक्त बाघ भैरव हवन, बाघ भैरव मन्दिर, कीर्तिपुर, समय बिहान ८:००-९:०० बजे ।

## आसके हेटौडाले गुरु पादुका पूजन शुभारम्भ गर्‍यो

परमपूज्य सद्‌गुरुदेवहरूको कृपा, अनुकम्पास्वरूप सिद्धाश्रम शक्ति केन्द्र आरती संचालन केन्द्र मकपानपुरले दिव्य गुरु महोत्सवको पावन अवसरमा गुरु पादुका पूजन शुभारम्भ गरेको छ। गत आषाढ महिनाको २१ तारिखदेखि उक्त आरती संचालन केन्द्रले गुरु पादुका पूजन गर्न शुभारम्भ गरेको हो ।

उक्त अवसरमा पूजन गर्ने सौभाग्य साधिका प्रतिमा देवकोटाले पाउनु भएको थियो भने कार्यक्रम संचालन साधक मनोज के.सी.ले गर्नुभएको थियो ।

# आश्रम गतिविधि

महाकाली एवं अप्सरा साधनाशिविरमा सदगुरुदेवहरुको पूजन गर्नुहुँदै पूज्य अरविन्द गुरुदेव (१), आरतीको क्रम (२), त्रिभुवन अन्तर्राष्ट्रिय विमान स्थलमा पूज्य अरविन्द गुरुदेवको स्वागत हुँदै (३), पूज्य अरविन्द गुरुदेवलाई नेपाली टोपी लगाउनुहुँदै सावपन्थी रामजी अर्यालज्यू (४) पूज्य अरविन्द गुरुदेव साधना शिविरमा (५) शिविरको क्षण

# आश्रम गतिविधि

महाकाली एवं अप्सरा साधना हुँदै (१), नृत्यरत साधकसाधिकाहरु (२), सिद्धाश्रम शक्ति केन्द्र र अन्तर्राष्ट्रिय सिद्धाश्रम साधक परिवारको संयुक्त प्रस्तुति 'करदो कृपा गुरुवर'को लोकार्पणको क्षण (३), पूज्य अरविन्द गुरुदेवको चरणमा माल्यार्पणको क्रम (४),पूज्य अरविन्द गुरुदेवका साथ साप र सामाज्यू (५), सुमधुर सांगीतिक प्रस्तुति (६), नृत्यरत साधिकाहरु (७, ८)

म.क्षे.हु.नि.द.नं. २१/०६८/६९ का.जि.का.द.नं. ७०/०५६

# हार्दिक आमन्त्रण !

परमपूज्य सद्गुरुदेवहरूको कृपा, आशीर्वादस्वरूप यही श्रावण १४-१५ गते सिद्धाश्रम शक्ति केन्द्र खुदीको आश्रम भवन उद्घाटन एवं शिव साधना शिविर सम्पन्न हुने भएकोले कार्यक्रममा भाग लिई सद्गुरुदेवहरू एवं भगवान् शिवको कृपा, आशीर्वाद प्राप्त गर्नुहुन हार्दिक अनुरोध गर्दछौं ।

साधनाको लागि आजै नाम दर्ता गर्नुहोला ।

स्थानः सिद्धाश्रम शक्ति केन्द्र (किरातेश्वर मन्दिर परिसर)
समयः बिहान १० बजे ।

सिद्धाश्रम शक्ति केन्द्र
खुदी, कास्की